● वर्ष १० ● अङ्क ६ ● माघ २०६५ ● पूर्णाङ्क ११४

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०,
  रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन: २२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## कर्मकाण्ड विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधवार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

# आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

अध्यात्म र भौतिकता दुवै नै मानव जीवनका महत्त्वपूर्ण पक्ष हुन् जसको सुसन्तुलनबाट मानव जीवन सुन्दर र पूर्ण बन्दछ। यी दुईमध्ये जब एउटा पक्षलाई बढ्ता महत्त्व दिएर अर्को पक्षलाई नजर अन्दाज गरिन्छ तब मानव जीवन कष्टप्रद बन्दछ। वर्तमान परिप्रेक्ष्यमा हेर्ने हो भने मानव जीवन अनेकौँ दुःख र समस्याहरुमा जेलिएको छ भने सम्पूर्ण समाज नै अन्यौल र समस्याहरुमा अल्मलिएको छ। यसको केवल अनि केवल एउटै कारण यही हो कि वर्तमान समयमा आध्यात्मिक पक्षलाई बिर्सिइएको छ अझ भनौँ अपहेलित गरिएको छ।

सिद्धाश्रम शक्ति केन्द्रले सधैँ नै भन्दै आइरहेको छ कि अध्यात्मको उत्थानबिना नेपालमा शान्ति स्थापना असम्भव छ। जब जनजनमा आध्यात्मिक चेतनाको उदय हुन्छ, जब समाज आध्यात्मिक चेतनाले आपूरित हुन्छ तब समाज स्वयं नै शान्त र सुन्दर बन्दछ। तसर्थ सबैले नै आत्यात्मिकताको लागि आ-आफ्नो तवरबाट प्रयास प्रयत्न गर्न अत्यावश्यक छ। यही नै वर्तमान समयको सबैभन्दा ठूलो माग हो। नेतृत्वपक्षमा यसको जिम्मेवारी अझ ठूलो बन्दछ। तसर्थ जबसम्म नेताहरु सुसंस्कारयुक्त हुँदैनन्, समाजमा सकारात्मक परिवर्तन देखा पर्न कठिन बन्दछ।

संस्कारयुक्त नेतृत्वले नै अध्यात्मको मर्म बुझ्दछ र यस्तो व्यक्तित्वले नै समाजलाई सही दिशानिर्देश गर्न सक्दछ। तसर्थ नेपाल आमालाई आज यस्तै नेतृत्वको आवश्यकता छ। धर्म, संस्कृति सबै नै आध्यात्मिक विराटताभित्रका आयाम हुन्। परापूर्वकालदेखि चलिआएका धर्म, संस्कृति, रीतिरिवाज आदिको सम्मान गर्नु सबैको दायित्व हो। जब यी कुराहरुलाई हेय र उपहासको दृष्टिले हेरिन्छ, जब धर्म र संस्कृतिमाथि अतिक्रमण हुन्छ, समाजमा जटिलता बढ्दछ। यो कुराको ज्वलन्त उदाहरणस्वरुपको घटना भर्खरै हाम्रो सामु घटेको छ। विकास, आधुनिकीकरण अथवा अन्य जुनसुकै नाममा पनि जब धर्म, संस्कृतिमाथि आक्रमण हुन्छ तब समाजको अधोपतन पनि सुनिश्चित बन्दछ।

मानव जीवनलाई सुन्दर, सुखमय बनाउँदै मृत्युपछिको जीवनलाई समेत ऊर्ध्वगति दिन अध्यात्मले धेरै आयामहरु प्रशस्त गरेको छ। यिनै विविध आयामहरुमध्ये कर्मकाण्ड अति नै महत्त्वपूर्ण आयामको रुपमा सनातन कालदेखि रहँदै आएको छ। जन्मदेखि मृत्युसम्म गरिने जति पनि कर्मकाण्ड छन्, ती सबैले मनुष्य जीवनलाई पशु जीवनबाट माथि उठाउँदै उच्चतातर्फ लगिरहेका हुन्छन्। यी सबै संस्कारभित्र गूढ वैज्ञानिक तथ्यहरु निहित छन् तर यो वास्तविकतालाई नबुझीकन कर्मकाण्ड संस्कारलाई अन्धविश्वास र पाखण्ड ठान्दै कतिपयले यिनलाई अपनाउन समेत छाडेका छन्। यस्तो प्रवृत्तिबाट मानिस धेरै चलाख हुन खोज्दाखोज्दै स्वयं मूर्ख बनिरहेको छ, यिनबाट प्राप्त हुने असीमित कल्याणकारी लाभहरुबाट वञ्चित भइरहेको छ।

तसर्थ आज एकपल्ट फेरि जनजनमा कर्मकाण्डप्रति चेतना जागृत हुन आवश्यक छ, परापूर्व कालमा जस्तै सबैले कर्मकाण्डको अवलम्बन गर्न आवश्यक छ। यस्तो भएमा समाज स्वयं नै कल्याणको मार्गतर्फ अग्रसर हुनेछ। यही कुराको आह्वान र निवेदनमा गोरक्ष निखिल वाणीको यो अंक 'कर्मकाण्ड विशेष'को रुपमा समर्पित छ। यस अंकमा भएका गल्ती, कमी, कमजोरीको लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष पनि क्षमा माग्दै आवश्यक सल्लाह, सुझाव एवं प्रतिक्रियाको आशा राख्दछौँ। अस्तु!

सामान्यरूपमा कर्मकाण्ड भन्नासाथ नै संस्कृतका मन्त्रहरू उच्चारण गर्दै गरिने कर्मलाई बुझ्ने गरिएको छ। त्यो पनि कर्मकाण्ड हो तर यसैलाई मात्र कर्मकाण्ड भनेर बुझ्दा कर्मकाण्डको मर्म बुझ्न सकिँदैन। शब्दकोशको व्याख्याअनुसार कर्मकाण्ड भन्नाले वेदको त्यो अङ्गलाई मानिएको छ जसले पूजा, पाठ, यज्ञादि अनुष्ठान आदिको विधि, प्रक्रिया आदिको वर्णन गर्दछ । हाम्रो जन्मदेखि मृत्युपर्यन्तको यात्रामा जति पनि संस्कारहरू पर्दछन्, ती सबै नै कर्मकाण्डकै माध्यमबाट सम्पन्न हुन्छन्। कर्मकाण्डमा विभिन्न मन्त्र, तन्त्र र यन्त्रहरूको समावेश भएको हुन्छ जसको सही परिचालनबाट हामीले आत्मालाई संस्कारित गर्न सक्दछौँ । कर्मकाण्डमा विशेषरूपमा पूजन र हवनको महत्त्वपूर्ण भूमिका रहेको हुन्छ ।

हामीले आफ्ना आराध्य देवदेवी, इष्ट वा गुरुहरूलाई खुसी बनाई आफ्ना जति पनि इच्छा, चाहना वा अभिष्ट छन् ती पूरा गराउन जति पनि प्रक्रिया गर्दछौँ यी सबै नै पूजा भित्र पर्दछन्। पूजाबाट हामीले भौतिक एवं आध्यात्मिक कामनाहरूलाई पूरा गर्दै जीवनलाई पूर्णतातर्फ अग्रसर गराउन सक्तछौँ । यदि हामीले सही विधि विधान एवं प्रक्रिया पुऱ्याएका छौँ भने सामान्यरूपमा हेर्दा असम्भव लाग्ने कार्य पनि पूजनको माध्यमबाट सम्भव बनाउन सक्छौँ । विज्ञानको कसीमा राखेर हेर्दा पनि पूजाको विशेष महत्त्व रहेको छ । पूजाको विधि विधानमा आउने प्रत्येक सामग्रीको उत्तिकै महत्त्व रहेको छ चाहे त्यो फूल, जल, चन्दन वा अक्षता नै किन नहोस् । हामीले फूललाई विश्लेषण गऱ्यौँ भने पवित्रताको प्रतीकको रूपमा यसलाई पाउँछौँ । हामी अत्यन्त तनावको अवस्थामा छौँ भने पनि यदि फूलहरू फूलिरहेको बगैँचामा बस्छौँ, फूललाई हेर्दछौँ भने हाम्रो तनाव स्वतः हटेर जान्छ । फूलमा भएको सकारात्मक तरङ्ग अर्थात् दैवी तरङ्गले हामीभित्रका नकारात्मक वा खराब तरङ्गलाई हटाई हामीलाई तनावमुक्त बनाइदिन्छ । यसैगरी जल, चन्दन, अक्षताको पनि विशेष महत्त्व रहेको हुन्छ र हामीले पूजामा आफ्ना आराध्यलाई चढाउने क्रममा ती सामग्रीहरू प्रयोग गर्दछौँ फलस्वरूप ती सामग्रीका तरङ्गहरूले हामीलाई सकारात्मक सोच र चिन्तन बढाउन मद्दत गर्दछन् । सकारात्मक सोचले नै हाम्रो जीवनलाई सफलताको शिखरमा पुऱ्याइदिन्छ ।

यसैगरी कर्मकाण्डमा विशेष भूमिका यज्ञादि कर्मको पनि हुने गर्दछ। हरेक माङ्गलिक कार्य पूजा र हवनबिना सम्पन्न भएको हुँदैन । जसरी पूजाको विशिष्ट योगदान हाम्रो संस्कारहरूमा एवं कर्मकाण्डमा छ, ठीक त्यसैगरी हवनको पनि विशिष्ट स्थान रहेको छ। हवनमा मन्त्रको उच्चारणसँगसँगै चरुको रूपमा प्रयोग गरिने जौ, तिल, चामल र घ्यूको मिश्रणलाई विशेष विधिविधानका साथ चैतन्य गरिएको अग्निमा अर्पण गरिन्छ । यसरी मन्त्र उच्चारण गर्दै चरु अग्निमा चढाउने कार्य गर्दा यसबाट एक किसिमको तरङ्गको साथसाथमा एक प्रकारको सुगन्ध पनि निस्किरहेको हुन्छ जुन सम्बन्धित देवीदेवता वा गुरुहरूसमक्ष पुगी उहाँको कृपा आशीर्वाद प्राप्त हुन्छ । अर्कोतर्फ चरु डढाउँदा जुन ग्याँस निस्कन्छ, त्यो अत्यन्त शक्तिशाली हुन्छ । यदि कुनै ठोस पदार्थमा प्वाल

प्रयोग गरुन् भनेर नै यस्ता पद्धतिहरूलाई कर्मकाण्डमा स्थापित गराई ती कर्मकाण्डलाई फेरि हाम्रो संस्कारसँग लगेर जोडिदिनु भएको छ । तर दुर्भाग्यवश ती परम्परालाई हामीले अलिअलि आत्मसात् गरे पनि पूर्ण विधि विधानका साथ अवलम्बन गर्न सकेका छैनौँ । फलस्वरूप जति फाइदा लिनुपर्ने थियो त्यति लिन सकेनौँ, जबरजस्ती लादिएको विषयवस्तु ठान्यौँ, भक्ति हुनुपर्ने ठाउँमा बाध्यता ठान्यौँ। आज आएर हेर्‍यौँ भने हरेक कुरा हामीलाई पनि छिटो छरितो गर्नुपरेको छ अनि आफूलाई कर्मकाण्डी भनाउनेहरूलाई पनि छिटोछिटो काम सकेर दाम बटुल्न हतार भएको छ । यसै कारणले पनि आजभोलि गरिने हाम्रा संस्कार पद्धतिहरूबाट हामी संस्कारित हुन सकेका छैनौँ । पानी उमाल्न जति समय लाग्दछ र उम्लिसकेपछि त्यो पानी सेलाउन पनि उत्तिकै समय लाग्दछ तर सलाईको एउटा काँटी सल्कन जति छिटो हुन्छ त्यति छिटो नै निभिहाल्छ पनि भनेझैँ आजभोलि गरिने कर्मकाण्डको फल पनि त्यस्तै भइरहेको हामीले पाउँदछौँ। आजभोलि वैवाहिक संस्कारमा गरिने कर्मकाण्ड यसको प्रमाण हो । यदि तपाईंको घरमा विवाह कार्य सम्पन्न हुँदैछ भने तपाईं कर्मकाण्डीकहाँ जानुहुन्छ । त्यसपछि तपाईंलाई पण्डितजीले सोध्नुहुन्छ– लामो विधिले गर्ने कि छोटो विधिले ? अनि तपाईंलाई पनि छिटो सम्पन्न गर्नुपर्ने हुन्छ, पण्डितजीलाई पनि छिटो सकेर अन्यत्र जानुपर्ने हुन्छ। त्यस्तै पण्डितजीहरूलाई पनि तपाईं हामी भन्छौँ– 'पण्डितजी, छिटो सकिदिनुपर्‍यो ।' त्यसैले पनि आजभोलि पण्डितजीहरूले हाम्रै मानसिकता अनुसार कर्मकाण्डलाई छोट्याइदिन्छन्, कारण हामीलाई छिटो चाहिएको छ । परिणास्वरूप जति चाँडो विवाह, त्यति नै छिटो पारपाचुके । पहिलेपहिले कर्मकाण्ड पुर्‍याएर विवाह गरिन्थ्यो र पारपाचुके कम हुन्थ्यो । आजभोलि विधिपूर्वक कर्म नगरिदिँदा पारपाचुके गर्नेहरूको संख्या पनि बढेको पाइन्छ । हुन त यसलाई कतिपयले आधुनिक संस्कृतिको उपज पनि मानेका छन्। जे भए पनि यो त एउटा उदाहरण मात्र हो । गर्भाधानदेखि दाहसंस्कारसम्म पर्ने सोह्र संस्कारहरूमध्ये कति त हामीले सुनेका पनि छैनौँ होला, गर्ने त परै जाओस्। त्यसमा पनि ती संस्कार पूरा गर्न गरिनुपर्ने विधि विधान अर्थात् कर्मकाण्ड हामीले पूरा गरेका हुँदैनौँ। फलस्वरूप हाम्रो जीवन ज्ञान, चेतना र उन्नतिको दृष्टिकोणले पछाडि परेको छ। त्यसैले यस्ता कर्महरूको मर्मलाई बुझेर यसका वैज्ञानिक पक्षहरूलाई उजागर गर्दै व्यवहारमा लागू गर्नु नै आजको आवश्यकता हो जसबाट समुन्नत समाजको निर्माण गर्न सकिन्छ।

सिद्धाश्रम शक्ति केन्द्रले यस्ता पक्षहरूलाई आफ्नो मूल विषयवस्तु बनाउँदै यसमा थपिएका नराम्रा परम्पराहरूलाई हटाउँदै वैज्ञानिक ढंगले समाजसामु उजागर गर्ने र व्यवहारमा लागु गर्ने कार्य गर्दै आइरहेको छ । परमपूज्य सद्गुरुदेवहरूले प्रदान गर्नुभएको विधिविधानका साथ यस संस्थाले आफ्ना कार्यक्रमहरूमा पूजन एवं हवन कार्यक्रमलाई सञ्चालन गर्दै आइरहेको छ। जय गुरुदेव !

**'यस्ता कर्महरूको मर्मलाई बुझेर यसका वैज्ञानिक पक्षहरूलाई उजागर गर्दै व्यवहारमा लागू गर्नु नै आजको आवश्यकता हो ।'**

पार्नु छ भने कुनै धातुले प्वाल पार्दा धेरै समय र परिश्रम पर्दछ तर ग्याँसको माध्यमले छिटो र सजिलोसँग हुन्छ । हवनमा निस्कने ग्याँसले ओजोन तहको वृद्धि गर्न पनि महत्त्वपूर्ण भूमिका खेल्ने प्रमाणित भइसकेको छ। यसबाहेक असाध्य रोगहरू पनि यज्ञको माध्यमबाट समाधान गर्न सकिन्छ । विभिन्न बाधा संकटहरूबाट पनि मुक्ति पाउन सकिन्छ। अन्य पनि धेरै फाइदा हुने वैज्ञानिकरूपमा नै प्रमाणित भइसकेको छ।

यसरी पूजन र हवनका आध्यात्मिक र भौतिक दुवै फाइदाहरू छन्। हाम्रा प्राचीन ऋषिमुनिहरूले हजारौँ वर्षको खोज अनुसन्धान गरी मानव कल्याणका लागि प्रदान गरिदिनुभएका यस्ता विधि विधानहरूले सम्पूर्ण मानवको स्वास्थ्यको रक्षा, सामाजिक, आर्थिक, सांस्कृतिकरूपबाट सम्वृद्ध गराई आध्यात्मिक र भौतिक समुन्नति प्रदान गर्दछन् । ती मानव कल्याणका पद्धतिहरूलाई आफ्ना सन्ततिहरूले जानेर होस् वा नजानिकनै भए पनि

# झारा टराइ नहोस् कर्मकाण्ड

मानव जीवनमा अत्यन्तै संवेदनशील पक्षहरू हुन्छन् । यी पक्षहरूलाई जीवनमा अपनाउन सकेमा मानव जीवन पनि सफल र धन्य हुन्छ । कर्मकाण्डको सम्बन्धमा यही भन्न सकिन्छ । मानिसका लागि अत्यन्तै महत्त्वपूर्ण कर्तव्य र दायित्व हो कर्मकाण्ड । कर्मकाण्डबिना मानव जीवन निरस र सारहीन हुन्छ । मानिसले जन्मँदादेखि मरुञ्जेलसम्म विविध कर्महरू गर्दछन् । यिनै कर्महरूको माध्यमबाट जीवनलाई मोक्षतर्फ निर्देशित गर्ने निश्चित प्रक्रिया नै कर्मकाण्ड हो । धार्मिक कार्य, उत्सव, महोत्सव, पर्व विशेषमा गरिने कार्यहरू, मृत्युसंस्कार, जन्मोत्सवजस्ता विविध संस्कारहरू विभिन्न जाति, धर्म र सम्प्रदायले आ-आफ्नै संस्कार र परम्पराभित्र बसेर गर्दछन् ।

**परिचय :**

संस्कृत नेपाली वृहत् शब्दकोषमा कर्मकाण्डलाई यसरी परिभाषित गरिएको छ– 'वेदको त्यो भाग जसमा यज्ञादि अनुष्ठानको विधि र वर्णन छ ।' सोही पुस्तकमा कर्मकाण्डलाई धर्मसम्बन्धी काम पनि भनिएको छ ।

त्यस्तै, नेपाली शब्दसागरमा यज्ञ याग आदि काम पूजा पाठ, व्रत नियम आदि काम धर्म कर्म, धर्म कार्य, पुरेत्याइँ, पण्डित्याइँ, यज्ञादिको विवेचना गर्ने शास्त्र हत्यौडी भनेर कर्मकाण्डको परिभाषा दिइएको पाइन्छ ।

मानिसको उत्पत्तिसँगसँगै चेतना र सभ्यताको विकासको क्रममा कर्मकाण्डको निरूपण हुँदै गएको अनुमान गर्न सकिन्छ । सभ्यताको आगमनसँगसँगै कर्मकाण्डले विस्तृत रूप लियो, यो अनुमान गर्न सकिन्छ । ऐतिहासिकरूपमा यसको थालनी कहिले भयो भन्ने कुरालाई विस्तृत अनुसन्धानको घेरामा राखेर हेर्नुपर्ने भए पनि सामान्यतया वेदको आरम्भदेखि नै यजुर्वेदको माध्यमबाट यसको शुरुआत भएको अनुमान गर्न सकिन्छ ।

**कर्मकाण्डको उद्देश्यः**

आफू पनि सुखी, आनन्दित हुने र अरूलाई पनि यसमा तरङ्गित गर्ने मानिसको स्वभाव हो । यस स्वभावबाट भिन्न छैन कर्मकाण्ड । जति पनि कर्मकाण्डसम्बन्धी कार्यहरू सम्पन्न हुन्छन् त्यसको भित्री आशय त सबैको हित र सबैको शान्ति, आनन्द हो । मानवलगायत सम्पूर्ण जगत्को कल्याणका लागि गरिने कर्मकाण्डले विश्वमै शान्ति छर्दै 'द्यौः शान्ति... वनस्पतयः शान्ति...' मन्त्रको उद्घोष गरेको छ । यति मात्र नभई जीवितलाई मात्र होइन, मरिसकेकाहरूको उत्थानका लागि पनि कर्मकाण्डलाई माध्यम बनाउने गरिन्छ । मृतकहरूप्रतिको दायित्वबोधले

सम्पन्न कर्मकाण्डका क्रियाकलाप सर्वहितकारक छन् किनकि यसैबाट पितृदेवलगायत अन्य देवीदेवताहरूको कृपा, आशीर्वाद प्राप्त हुन्छ ।

**कर्मकाण्डी कस्तो हुनुपर्छ ?**

निश्चय नै कर्मकाण्ड गराउने व्यक्ति कस्तो हुनुपर्छ भन्ने विषय महत्त्वपूर्ण हुन्छ । विधि जान्ने, शास्त्रसम्मत कर्म गर्ने व्यक्ति नै योग्य कर्मकाण्डी हुन सक्छन् । त्यस्तै भक्ष्याभक्ष्य नखाने, निर्लोभी, सदाचारी व्यक्ति नै कर्मकाण्डका लागि योग्य मानिन्छन् । शुद्ध लेनदेन, चारित्रिक बल हुनुका साथै मनोयोग र बुद्धियोगले कर्मकाण्ड गराउने व्यक्तिलाई नै यसका लागि योग्य मान्न सकिन्छ । तर आजभोलि बेग्लै परिपाटी बसेको छ । जसरी हुन्छ तानतुन गर्ने, झारा टार्ने र फास्टफुडजस्तै छिटो सिध्याउने कुसंस्कार बस्दै गएकोले कर्मकाण्डमाथि नै प्रश्नचिह्न तेर्सिन गएको छ। विधि-विधान नपुऱ्याई, नियमलाई तोडमरोड गरी छिटो टुंग्याउने गर्नाले अपेक्षित लाभ नपुग्ने हुन्छ र यसमाथिको आस्था, विश्वास नै गुम्न जाने हुन्छ । अर्कोतिर मानिसहरूले कर्मकाण्ड सम्पन्न गराउँदा आस्था, विश्वास, समर्पण, पवित्रतालाई धारण नगरी अहं र प्रदर्शन मात्र गर्ने गर्दा कर्मकाण्डको लाभ पक्ष कमजोर हुन पुग्दछ । यसबाट अपेक्षित लाभ नपुग्दा आफ्नो अहंलाई मात्र तुष्टि पुग्ने हुन्छ ।

संसारमा हिन्दुले मात्र कर्मकाण्ड गर्दछन् त ? यो प्रश्न पनि उठ्न सक्छ । कर्मकाण्डलाई त सबै धर्मले, सबै सम्प्रदायले, सबै जातजातिले निभाएकै हुन्छन् । यसमा विधि-विधानमा केही फरक हुन सक्छ, तौर तरीकामा केही तलमाथि हुन सक्छ, गर्न त सबैले गर्छन् । कर्मकाण्डबिनाको जीवनको कल्पनासम्म पनि गर्न सकिन्न । यदि मानिस जन्मेर मृत्यु नभएसम्म खाली खाएर र काम गरेर मात्र बस्ने हो भने कति निरस जीवन हुन्छ होला । यदि जन्मँदा, मर्दा गरिने संस्कारहरू नगर्ने हो, यदि यज्ञ-यज्ञादि कर्मलाई तिलाञ्जलि दिने हो, यदि अन्यान्य धार्मिक अनुष्ठानहरू सम्पन्न नगर्ने हो भने हामी पनि जीवित रहन सक्ने छैनौँ किनकि यी कर्महरू त यस्ता छन् जसले देवता, पितृ, दैत्य, राक्षस आदिलाई तृप्त गरेर त्यसको बदलामा मानवको कल्याण गर्दछन् ।

**अन्तमा,**

आफ्नो अहंलाई मात्र तुष्टि दिन, प्रदर्शनका लागि मात्र गरिने कर्मकाण्डले नयाँ पुस्तालाई भ्रममा पार्न सक्दछ किनकि यसबाट अपेक्षित लाभ प्राप्त हुँदैन । कर्मकाण्डमाथि वितृष्णा जगाउने माध्यम नै दम्भयुक्त कर्मकाण्ड हुन जान्छ । कर्मकाण्ड एउटा महान् लाभदायक कार्य हुँदाहुँदै पनि कतिपय असावधानी र विधि-विधानको कमजोरीले गर्दा यसका फाइदाहरू पाउन सकिन्न । यसबाट मानिसहरूको कर्मकाण्डप्रतिको

आस्था, विश्वास सेलाउन पुग्छ । अझ युवापुस्तामा यसको नकारात्मक असर पर्न जानु भनेको पूरै समाज र देशलाई नै पङ्गु बनाउनु हो । युवापुस्ता नै देशको मेरुदण्ड हुनाले कर्मकाण्डजस्तो विषयलाई वैज्ञानिकरूपमा पुष्टि गर्दै, यसका वैज्ञानिक पक्षलाई उजागर गर्दै उनीहरूलाई यसतिर आकर्षित गर्नुपर्दछ । यही आकर्षणले पछिको पुस्तालाई यसतिर झुकाउन सजिलो हुन्छ । वैज्ञानिकरूपमा यसका फाइदा पक्षलाई केलाएर समाजसामु राख्न सके यसबाट आस्था गुमाएकाहरूलाई पुन: यसमा आस्थावान् बनाउन सकिने थियो । यसका लागि त सबैले आफ्नो कर्तव्यलाई यथाशक्ति निभाउनु पर्दछ ।

त्यस्तै, कर्मकाण्डका निष्णात् व्यक्तिहरूको तयारी गर्नु पनि उत्तिकै खाँचो रहेको छ । यसका लागि विज्ञहरूबाट यस विद्याको पठन-पाठन गराउनु पनि आवश्यक भइसकेको छ । कर्मकाण्डलाई विज्ञानसम्मत ढङ्गले प्रस्तुत गरेर पदार्थको रूपान्तरण,

मानिसको भावपक्षको सम्प्रेषण आदिमा युवा जमातलाई बुझाएर यसतिर आकर्षित गर्नुपर्ने आजको टड्कारो विषय हुन पुगेको छ ।

जय गुरुदेव !

# कर्मकाण्डको प्रत्यक्ष प्रभाव

**आजभोलिका कर्मकाण्डी विद्वान्हरूलाई कर्मकाण्डको प्रत्यक्ष प्रभाव यजमानले तत्काल महसुस गर्न सक्छ भन्दा उनीहरुले पनि यो कुरालाई विश्वास गर्न सक्तैनन् किनकि जीवनभरि उनीहरुले कर्मकाण्ड नै गर्दै गराउँदै आइराखेका छन् । तर न त कहिल्यै यसको प्रत्यक्ष प्रभावको अनुभूति स्वयंले गर्न सकेका छन्, न त अरुलाई नै दिलाउन सकेका छन् । केवल जीविकोपार्जनको माध्यमका रूपमा आफूलाई पण्डित, पुरोहित, विद्वान् भनाएर खुट्टा ढोगाउनु, शास्त्र पुराणका वचनहरुलाई कण्ठस्थ बनाएर सुगा रटाइबाट ज्ञान प्रदान गर्नु उनीहरूको नियति बनेको छ जबकि कर्मकाण्डको वास्तविकता अलग्गै छ । यदि कर्मकाण्डीमा क्षमता छ भने उसले तुरुन्त पूजन, हवन, आदिको प्रभाव महसुस गर्न र गराउन सक्तछ । यस कुराको प्रत्यक्ष प्रमाण परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालका विभिन्न समयमा सयौं विद्वान् पण्डितहरुका माझ दिनुभएको छ र उनीहरुलाई समेत आश्चर्यचकित बनाइदिनुभएको छ । त्यस्तै केही घटनाहरुका बारेमा सद्गुरुदेवका शिष्य निर्मल देव चैतन्यले उल्लेख गर्नुभएका प्रसंगहरू यस अंकमा प्रकाशित गरिएका छन् ।**

## सूर्य चन्द्रको प्रत्यक्ष अनुभूति

यो घटना पनि मैसूरमा नै घटेको थियो। त्यहाँ करणराजले मूर्ति स्थापना गर्नुभन्दा पहिल्यै यज्ञको आयोजना गरेका थिए जसमा उत्तर र दक्षिण भारतका विद्वान्हरूलाई बोलाइएको थियो । उनीहरूले वेदीको साथसाथै प्रत्येक ग्रह स्थापन अलग-अलग गरेका थिए ।

विशेष मन्त्रबाट ग्रहहरूको आवाहन र स्थापन प्रयोग सम्पन्न भयो । जब ग्रह स्थापन भयो र यज्ञ शुभारम्भ भयो, त्यही समयमा ती धनाढ्य पनि पूज्य गुरुदेवका साथ यज्ञ-मण्डपमा आए ।

यज्ञमा एकजना संन्यासीलाई आएको देखेर दक्षिण भारतीय पण्डितहरूले नाक खुम्च्याए । शायद उनीहरूलाई गुरुदेव आउनुभएको राम्रो लागेन होला अथवा उहाँले कुनै त्रुटि देखाउनुहोला भन्ने डर उनीहरूलाई भएको हुन सक्छ ।

गुरुदेवले सोध्नुभयो, 'कर्मकाण्डअनुसार सम्पूर्ण कार्य सम्पादित भइसक्यो ?'

ती पण्डितहरूमध्ये श्रेष्ठ माधवप्रसादले भने, 'यो हामी पण्डितहरूको कार्य हो, प्रवचन होइन' ।

गुरुदेवले मलाई भन्नुभयो, 'तँ गएर जुन सूर्य ग्रह स्थापना वेदी छ, त्यहाँ स्पर्श गर जसबाट थाहा हुन सकियोस् कि त्यहाँ सूर्य स्थापित छन् वा छैनन् ।

यस कुरालाई उहाँले ठूलो स्वरमा भन्नुभएको थियो। मैले उठेर सूर्य स्थापित वेदीमा स्पर्श गरेँ तर मलाई कुनै विशेष अनुभव भएन ।

पण्डितहरूले भने, 'त्यहाँ के अनुभव हुनुपर्छ र ? हामीले मन्त्रका साथ सूर्यलाई आवाहन गरेर स्थापना गरेका छौं, फेरि षोडशोपचार पूजन गरेर उनलाई संस्थापित गरेका छौं ।'

गुरुदेवले भन्नुभयो, 'तपाईंले अवश्य सूर्यलाई आवाहन गर्नुभयो होला, तर त्यहाँ सूर्य स्थापित त भएनन् । यदि त्यस वेदीमा सूर्य स्थापित भएका थिए भने स्पर्श गर्दा सूर्य भएको आभास मिल्दथ्यो ।'

माधवप्रसादले भने, 'कस्तो आभास ? आभास भनेको के हो ?'

गुरुदेवले धनाढ्यलाई भन्नुभयो, 'तपाईं एउटा हातले सूर्य स्थापित वेदीमा स्पर्श गर्नुहोस् र अर्को हातले चन्द्र स्थापित वेदीमा स्पर्श गरेर तपाईंलाई अनुभव भइरहेको कुरा मलाई भन्नुहोस् ।'

गुरुदेवको आज्ञा पाएर यज्ञ संचालक र प्रबन्धक धनाढ्ले दुवै वेदीहरूलाई स्पर्श गरे । उनले भने, 'कुनै पनि आभास भइरहेको छैन ।'

गुरुदेवले भन्नुभयो, 'त्यहाँ केवल चामलको थुप्रो मात्र छ, त्यहाँ न त सूर्य स्थापित भएका छन् र न त चन्द्रमा नै । बाँकी ग्रह पनि स्थापित भएका छैनन् होला ।'

माधवप्रसादको कन्सिरी तात्यो। उनले चिच्याए, 'म पण्डित हुँ र विगत चालीस वर्षदेखि मैले यो कार्य गर्दै आइरहेको छु। मलाई हाँक दिने कोही जन्मेकै छैन ।'

गुरुदेवले अत्यन्त नम्रतापूर्वक जवाफ दिनुभयो, 'निश्चय नै तपाईं विद्वान् र पण्डित हुनुहुन्छ । म त यो भनिरहेको छु कि ती वेदीहरूमा ग्रह स्थापित भएका

छैनन्, न त उनीहरू आएका नै छन् जबकि मन्त्रहरूको प्रयोजन त यो हो कि यसको आवाहन गरेपछि उनीहरूको उपस्थिति होस्' ।

यसपछि गुरुदेवले सूर्य मन्त्रबाट सूर्यलाई आवाहन गर्नुभयो र त्यसै वेदीमा उनलाई स्थापित गर्नुभयो । तत्पश्चात् यजुर्वेदको 'इमनदेवा' मन्त्रबाट चन्द्रलाई आवाहन गर्नुभयो र उनलाई पनि उनको वेदीमा स्थापित गर्नुभयो ।

माधवप्रसादले सूर्य वेदीको नजिक गएर त्यसको बीचमा जब स्पर्श गरे, तुरुन्तै उनको हात पोल्यो । हातका रोम-प्रतिरोम जले, कुहिनासम्म हातको दशा यस्तो थियो कि उनले आगोमा हातै घुसारेको होस् । लगभग चिच्याउँदै उनले हातलाई त्यहाँबाट हटाए ।

उपस्थित सम्पूर्ण जनसमुदाय स्तब्ध थिए । उनीहरूले पहिलोपटक यस्तो महसुस गरेका थिए कि यदि सही ढङ्गबाट मंत्र उच्चारित गरिन्छ भने आज पनि देवताहरू उपस्थित हुन्छन् ।

भारतको उज्जैनस्थित महाकालेश्वरमा स्थापित नवग्रह

फेरि गुरुदेवले धनाढ्यलाई भन्नुभयो, 'तपाईं गएर चन्द्र वेदीमा स्पर्श गरेर हेर्नुहोस् कि त्यहाँ चन्द्र स्थापित छन् वा छैनन् ।'

गुरुदेवको आज्ञानुसार धनाढ्य उठे र उनले जसै चन्द्र वेदीलाई स्पर्श गरे तब उसलाई यस्तो लाग्यो कि पूरा हात हिउँमा डुबेको छ । त्यस एक सेकेण्डमा नै हातको रगत जम्न लागेको अनुभव भयो । उनले भने, 'धेरै चीसो छ, हिउँजस्तो' ।

त्यसपश्चात् हामी पनि उठ्यौं र मानिसहरूको आग्रहको बावजुद पनि हामी मैसूरबाट प्रस्थान गर्‍यौं ।

# यसरी भयो प्राण प्रतिष्ठा

यो घटना मैसूरको हो । त्यहाँका प्रतिष्ठित धनाढ्य करणराजले एउटा मन्दिर बनाएका थिए जसमा वेंकटेश्वरको मूर्ति स्थापना गर्ने उनको विचार थियो । उनले धेरै दिन अगाडिदेखि नै मन्दिर र मूर्तिको प्राण-प्रतिष्ठा गरिदिन तथा यस कार्यक्रमको उद्घाटन गरिदिन परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूसँग आग्रह गरिरहेका थिए ।

राति हामी चाँदनीमा बसेका थियौं । गुरुदेवले भन्नुभयो, 'विशेष मन्त्रबाट प्राण-प्रतिष्ठा नगरेसम्म कुनै पनि मूर्ति प्राण-शक्तिहीन हुन्छ । प्राण-प्रतिष्ठा गरेपछि मात्र त्यसमा तेजस्विता र चैतन्यता आउँछ ।'

भोलिपल्ट मन्दिरमा मूर्तिलाई स्थापित गरियो र त्यसको अगाडि आठ फिट अग्लो र चार फिट चौडा ऐना राखियो । यो ऐना किन राखियो भन्ने बारेमा न हामीलाई थाहा थियो न त त्यहाँ प्राण-प्रतिष्ठाको समयमा उपस्थित हजारौं मानिसलाई नै ।

गुरुदेवले मूर्ति र त्यस ऐनाको बीचमा मलमलको एउटा पर्दा राखिदिनुभयो । उहाँले भन्नुभयो, 'मूर्तिमा प्राण-प्रतिष्ठा भएको छ कि छैन भन्ने प्रमाणको लागि प्राण-प्रतिष्ठापश्चात् जब पर्दा हटाइन्छ, मूर्तिको पहिलो तेज ऐनामा पर्दछ, तब त्यस तेजलाई सहन नसकेर त्यो ऐना फुट्छ ।'

यो कुरा एक कान दुई कान गर्दै सबै उपस्थित श्रोताहरूमाझ पुग्यो । यस्तो कसरी हुन सक्छ भनेर सायद सबैले सोचिरहेका थिए । बुज्रुकहरूले भने, 'हामीले आफ्नो जीवनमा कैयौं प्राण-प्रतिष्ठा समारोहमा भाग लियौं तर यस्तो त कहीं पनि देखेका छैनौं ।'

गुरुदेवले विशेष मन्त्रबाट मूर्तिमा प्राण-प्रतिष्ठा सम्पन्न गराउनुभयो । यसमा करिब तीन घण्टा लाग्यो र प्राण-प्रतिष्ठाको अन्तिम मन्त्र पढेपश्चात् हामीलाई मात्र होइन, उपस्थित सबै दर्शकहरूलाई लाग्यो कि मूर्तिमा केही विशेष तेजस्विता आएको छ ।

प्राण-प्रतिष्ठाको कार्य सम्पन्न भएपछि हजारौं मानिसको उपस्थितिमा जब बीचमा रहेको पर्दा एकातर्फ सारियो, तुरुन्त नै ऐना टुक्राटुक्रा भएर फुट्यो । वास्तवमा यो अप्रत्याशित घटना थियो ।

गुरुदेवले यसको स्पष्टीकरण दिँदै भन्नुभयो, 'यो मन्त्रको प्रभाव हो । प्राण-प्रतिष्ठाको तात्पर्य यो हो कि मूर्तिमा तेजस्विता आउनुपर्दछ र त्यस तेजस्विताको प्रभाव ऐनाले झेल्न भने सक्तैन ।'

आज पनि त्यो मन्दिर अत्यन्तै भव्य र प्राणश्चेतनायुक्त छ । मानिसहरू अहिले पनि भन्दछन् कि त्यस मूर्तिको दर्शनबाट मनमा पूर्ण सन्तोष र आनन्द प्राप्त हुन्छ ।

# भगवान् गणेश र वेदव्यासको प्रत्यक्ष दर्शन

एकपटक मनालीमा गुरुदेव विचरण गर्दै हुनुहुन्थ्यो । त्यस समयमा म उहाँको साथमा थिएँ । व्यास गुफाको सामुन्ने हामी सबै शिष्य बसेका थियौँ । सद्गुरुदेव त्यस समय प्रसन्नचित्त हुनुहुन्थ्यो । मेरा गुरुभाइ हरिहर स्वामीले अवसर देखेर सोधे, 'के यसै गुफामा चार वेद र उहाँको भाष्य लेखिएको थियो ?'

सद्गुरुले उनीतर्फ हेर्दै भन्नुभयो, 'निश्चय नै यो त्यही पावन स्थल हो जहाँ वेदव्यासले समस्त वेदहरू र पुराणहरूको सम्पादन गर्नुभएको थियो । उहाँ बोल्दै जानुहुन्थ्यो र गणेश लेख्दै जानुहुन्थ्यो । तर यो घटना समाप्त भएको छैन, आज पनि यहाँ वेदव्यास र गणेश विद्यमान हुनुहुन्छ ।'

यसपटक हामी सबै शिष्यहरू आश्चर्यमय हुनुपर्ने स्थिति थियो । मैले सोधेँ, 'के अहिले पनि वेदव्यास र पार्वतीनन्दन गणेश यहाँ विद्यमान हुनुहुन्छ ?'

सद्गुरुदेवले भन्नुभयो, 'अवश्यै किनकि यो सम्पूर्ण भूमि उहाँहरूको नै सौरभबाट सुरभित छ । म अहिले पनि उहाँहरू दुवैलाई व्यास नदीको किनारमा विचरण गर्दै गरेको देखिरहेको छु । तिमीहरू पनि चाहन्छौ भने उहाँहरूलाई देख्न सक्छौ ।' हामी सबै रोमाञ्चित भयौँ । युगपुरुष वेदव्यास र भगवान् शिवका समर्थ पुत्र गणेशको दर्शन हामी सबै शिष्यहरूलाई यति सजिलै हुन सक्छ भनेर त हामीले कल्पना पनि गरेका थिएनौँ ।

गुरुदेवले हामी सबैलाई आँखा बन्द गर्न भन्नुभयो र स्तोत्रका केही पङ्क्तिहरू उच्चारण गर्नुभयो जुन आज पनि मलाई स्मरण छ ।

ॐ लं नमस्ते गणपतये । त्वमेव प्रत्यक्षं तत्त्वमसि ॥ त्वमेव केवलं कर्तासि । त्वमेव केवलधर्तासि । त्वमेव केवलं हर्तासि ॥ त्वमेव सर्वं खल्विदम्ब्रह्मासि । त्वं साक्षादात्मासि नित्यं । ऋतं वच्मि । सत्यं वच्मि । सत्यं वच्मि अव त्वं माम । अव वक्तारम् ॥ अव श्रोतारम् ॥ अव दातारम् ॥ अव धातारम् । अवानुचानमवशिष्यम् ॥

सम्भवत: यी गणेश-उपनिषद्का नै पङ्क्तिहरू थिए होलान् । अकस्मात् हामी सबैको आँखा स्वत: खुल्यो । हामी सबैको मुख व्यास नदीतर्फ थियो । यस्तो देखियो कि सामुन्ने शिलामा भगवान् वेदव्यास बस्नुभएको छ र उहाँको साथमा गणेश बस्नुभएर केही लेखिरहनु भएको थियो । वेदव्यास निरन्तर बोल्दै गइरहनुभएको थियो र गणेश टाउको पनि नउठाइकन लेख्दै गइरहनु भएको थियो ।

वस्तुत: यो क्षण आफैमा यस्तो महान् थियो कि सय वर्षको सारा अनुभव पनि यस क्षणको सामुन्ने तुच्छ छ । यो दृश्य यति महान् र अद्वितीय थियो कि हामी सबै रोमाञ्चित-पुलकित थियौँ र आफूलाई गौरवान्वित अनुभव गरिरहेका थियौँ ।

यो दृश्य लगभग पाँच मिनेटसम्म रह्यो । वेदव्यासले स्मश्रुयुक्त अनुहार उठाउनु भयो, हामीले देख्यौँ कि उहाँको नेत्रबाट आशीर्वाद वर्षियो । भगवान् गणेशको दिव्य तेजस्वी अनुहार पनि हाम्रो सामुन्ने साकार थियो ।

यस घटनाको साक्षी म मात्र होइन अपितु हरिहर स्वामी, किंकर बाबा, शुद्धानन्दजी, प्रियरंजन स्वामी आदि कैयौँ छन्, जो हाल पनि जीवित हुनुहुन्छ ।

# म संघर्ष निम्त्याइरहेछु

–परमपूज्य सद्‌गुरुदेव
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

श्रीकृष्णोपनिषद्‌बाट म आफ्नो भनाइ प्रारम्भ गर्न गइरहेको छु । वेदव्यासले उपनिषदहरूको संग्रह गरे, संकलन गरे । त्यसै मध्येबाट कृष्णोपनिषद्‌को एउटा श्लोक यस्तो छ–

पूर्ण सदैव विजयं च देवं
देव्यो सदा ज्ञान मृतं वदैवं
मृतवत्स पुत्र, भवतां च तुल्यं
विजय सदैवं श्रवतां श्री देव: ।

यो श्लोकमा वेदव्यासले भनेका छन्– मनुष्यको अर्थ हो मरेको वा मृत । केवल सास फेरिरहेको हुनाले नै मानिस जीवित छ । सास रोकिनेबित्तिकै शरीरका सारा अङ्ग-प्रत्यङ्ग उसका आफ्नै भए पनि उसलाई मृत भनिन्छ । कोही जीवित छ भने उसमा श्वास लिने क्रिया हुन्छ, उसले श्वास लिन्छ र छोड्छ । त्यसबेला उसले तीनवटा कार्य गरिरहेको हुन्छ– श्वास लिने, धारण गर्ने र छोड्ने ।

वेदव्यासले मनुष्यलाई किन मृत भने होलान् ? के श्वास लिनु र नलिनुबाट मात्रै व्यक्ति जीवित वा मृत हुन्छ र ?

वास्तवमा मृत व्यक्ति त्यही हो जसमा हौसला छैन, साहस छैन, क्षमता छैन र संकटमा संघर्ष गर्ने क्षमता छैन । त्यस्तो मानिस मृत हो । मनुष्य त हो, जीवित पनि छ, हिँडडुल पनि गर्छ तर पनि ऊ मरेको छ किनकि उसमा निरसता छ, उसमा कुनै नवीनता छैन, कुनै नयाँपन छैन, कुनै चेतना छैन, कुनै प्रबुद्धता छैन ।

जीवनमा यदि संकट छैन, बाधा छैन, अड्चन छैन, कठिनाइहरू छैनन् भने त्यो मनुष्य जीवन नै हुन सक्दैन । मनुष्य जीवन त्यसलाई भनिन्छ जसमा पाइला पाइलामा समस्याहरू आऊन्, कठिनाइहरू आऊन् र हामीले तिनीहरूमाथि विजय प्राप्त गरौँ । जसले यस्तो गर्न सक्दछ उसैको जीवन नै वास्तवमा मनुष्य जीवन हो ।

विज्ञानले यस कुरालाई स्वीकार गरेको छ कि जसले संघर्ष गरेको छ अथवा जो संघर्षशील छ, चाहे त्यो जनावर होस् वा जीव, ऊ नै जीवित रहन्छ । जसमा संघर्ष गर्ने र समस्याहरूसँग जुध्ने क्षमता समाप्त भयो, त्यो मर्‍यो । डाइनोसर अहिलेसम्म जीवितरूपमा रहेको भए अहिले पनि संसारकै सबैभन्दा ठूलो प्राणीमा गनिने थियो । हात्ती, गोही, ह्वेल माछा त उसको सामु एकदमै तुच्छ प्राणी ठहरिन्थे । आजभन्दा हजारौँ वर्ष अगाडि विशालकाय जीव डाइनोसरको मृत्यु भयो । अहिले एउटा डाइनोसरको पनि अस्तित्व छैन ।

किन ?

जसको मुखमा पाँच सय मानिस अटाउन सक्छन्, त्यस्तो विशाल प्राणी जीवित रहन सकेन, यसको के कारण होला ? डाइनोसर किन जीवित रहन सकेन ?

तपाईँलाई थाहा हुनुपर्दछ कि आजभन्दा तीन हजार वर्ष पहिले पनि भ्यागुताहरू थिए र आज पनि जीवित छन् । सबैभन्दा पुराना केवल दुईवटा मात्र जीव संसारमा पाइन्छन् जो हजारौँ वर्षदेखि हामीबीच छन्– एउटा हो साङ्लो र अर्को भ्यागुतो । बाँकी सबै जातिको अस्तित्व क्रमश: नष्ट हुँदै गयो, परिवर्तित हुँदै गयो । तर भ्यागुतो र साङ्लोमा कुनै परिवर्तन आएन र ती दुवै जीव अहिले पनि त्यस्तै छन् जस्तो

तीस हजार वर्ष अगाडि थिए । तीस हजार वर्ष भनेको अत्यन्तै लामो समय हो र यति लामो समयदेखि उनीहरू जीवित छन् । यस्तो किन भयो ?

यसको कारण हो– प्रत्येक परिस्थितिमा बाँच्न सक्ने क्षमता उनीहरूसँग छ । तपाईंले देख्नुभएको होला, पानी परेको बेलामा भ्यागुतो पानीमा पौडिन्छ, ट्वारट्वार कराउँछ र जब वर्षा समाप्त हुन्छ तब कुनै फोस्रो ढुङ्गामा भ्यागुतो घुस्छ र त्यसमाथि एउटा पत्र बस्छ,– वायुको पत्र होस् वा बालुवाको ।

यदि तपाईं दुई-चार घण्टा बाहिर बस्नुभयो भने तपाईंमाथि पनि बालुवाको पत्र बस्नेछ । यदि तपाईं सेतो लुगा लगाएर कुनै व्यस्त चोकमा बस्नुभयो भने तपाईंमाथि धूवाँको, बालुवाको पत्र छाउनेछ र कपडा कालो हुनेछ र दस दिनसम्म स्नान गर्नुभएन भने तपाईंको शरीरमा यति धेरै मैलो जम्मा हुनेछ कि तपाईंले शरीरमा चारपटकसम्म पनि साबुन लगाउनुपर्ने हुन सक्छ ।

तपाईं स्वयंले आफ्नो शरीर मैलो बनाउनु भएको होइन तर पनि मैलो तपाईंको शरीरमा जम्यो, कपडामा पनि जम्न गयो । भ्यागुतो छ महिनासम्म त्यस ढुङ्गामुनि रहन्छ र बाहिरबाट उसलाई अक्सिजन पनि प्राप्त हुँदैन । यसको बावजुद पनि भ्यागुतो जीवित रहन्छ । जुन जीव छ महिनासम्म बिनाअक्सिजन जीवित रहन सक्छ, त्यो मर्नै सक्दैन किनकि उसमा संघर्ष गर्ने क्षमता छ, शक्ति छ, तागत छ । त्यसले महसुस गर्दछ कि जीवनमा संघर्ष छ, कठिनाइ छ, र कठिनाइको बावजुद पनि त्यसले जीवित रहने क्षमता राख्दछ, तागत राख्दछ । त्यसैले भ्यागुतो जीवित छ, साङ्लो जीवित छ । त्यसैले ऊँट जीवितै छ । ऊँट तीस दिनसम्म पानीबिना जीवित रहन सक्छ ।

**विज्ञानले यस कुरालाई स्वीकार गरेको छ कि जसले संघर्ष गरेको छ अथवा जो संघर्षशील छ, चाहे त्यो जनावर होस् वा जीव, ऊ नै जीवित रहन्छ । जसमा संघर्ष गर्ने र समस्याहरुसँग जुध्ने क्षमता समाप्त भयो, त्यो मर्‍यो ।**

पानीबिना ऊ तीस दिनसम्म मरुभूमिमा हिँड्न सक्छ । यो एउटा सानो उदाहरण हो । तपाईंले बुझ्नुहोस्– जीवित उही रहन सक्छ जसमा संघर्ष गर्ने पूर्ण क्षमता हुन्छ, र संघर्ष त्यसले गर्न सक्छ जसको सामु समस्या आउँछ ।

समस्याहरू आएनन् भने त संघर्ष कोसँग गर्ने ? पति-पत्नीबीच संघर्ष हुँदैन, मतभेद हुन्छ । तपाईं यसैलाई लडाइँ-झगडा मान्नुहुन्छ, म यसलाई मतभेद भन्दछु । यो कुनै लडाइँ-झगडा होइन । यो त एउटा टक्कर हो । श्रीमती एउटा कुरा भन्छे, तपाईं अर्को भन्नुहुन्छ । त्यसैले दुईबीच मतभेद शुरु हुन्छ । यसबाट घरमा तनावको स्थिति रहन्छ । तर यो तपाईंको संघर्ष भने होइन । तपाईंको संघर्ष छोरासँग पनि छैन, तपाईंको संघर्ष पत्नीसँग पनि छैन र तपाईंको संघर्ष तपाईं स्वयंसँग पनि छैन । त्यसैले तपाईं बिस्तारै-बिस्तारै समाप्त हुँदै जानुहुन्छ किनकि तपाईंसँग कुनै संघर्ष नै छैन ।

ऋषिहरू दुई सय वर्ष, तीन सय वर्ष जीवित रहेको हामीले सुनेका छौं । यदि तपाईं पनि त्यस साधनात्मक तहमा हुनुहुन्छ भने तपाईंले पनि देख्न सक्नुहुन्छ कि पाँच सय वर्ष, हजार वर्षका ऋषि, योगीहरू आज पनि जीवित छन् । हामी त केवल साठी वर्ष वा सत्तरी वर्ष मात्र जीवित रहन सक्छौं ।

हामी साठी-सत्तरी वर्षको भएपछि मर्छौं, यस्तो किन भइरहेको छ ? अत्यन्तै कठिनाइका साथ मात्रै अस्सी वर्षसम्म जीवित रहेका मानिसहरू पाइन्छन् । सय वर्षसम्म कोही बाँचेको छ भने सरकारले उसको अभिनन्दन गर्छ । के सय वर्ष प्राप्त गर्नु ठूलो कुरा हो ? भ्यागुतोले त एक हजार वर्ष प्राप्त गरेको छ ।

आजभोलि मानिस सय वर्ष पनि प्राप्त गर्न समर्थ छैन । मानिस त्यसैकारण टुट्दछ किनकि उसको सामु कुनै संघर्ष छैन । यसबाट व्यक्तिको जीवन एकरस हुन जान्छ र जहाँ एकरसता छ त्यहाँ मृत्यु हुन्छ । बिहान उठ्यो, स्नान गर्‍यो, लुगा लगायो, खाना खायो, अफिस गयो । अफिसबाट फर्क्यो, श्रीमतीसँग कुरा गर्‍यो, खाना खायो र सुत्यो । तीस दिनसम्म महिनामा यसरी नै बित्दछ । बिदाको दिनबाहेक सधैं यस्तै क्रम चल्दछ । बिदाको दिनमा त अखबार पढिएला र ओछ्यानमा नै सुतेर बसिएला, 'बेड टी' पिइएला । बिदाको भोलिपल्ट फेरि यसरी नै व्यतीत हुन्छ ।

तपाईं विचार गर्नुहुन्छ जीवनमा समस्या आयो भने, तनाव आयो भने, अनिश्चितता आयो भने भोलि के होला ? तर कसैले तरवार लिएर तपाईंको घाँटीमा तेर्स्याएको छैन, बन्दूक लिएर तपाईंको सामु उभिएको छैन । केही भएकै छैन । यस्तो भए पनि बच्नु त तपाईंको धर्म हो । यसको अर्थ यो होइन कि तपाईं बन्दूकसामु उभिएर गुरुले भन्नुभएको छ भनेर संघर्ष गर्नुस् । तर कोही अगाडि आउँछ भने उसलाई पछारेर उसको टाउकोमा टेक्न सक्ने क्षमता तपाईंमा हुनुपर्दछ । त्यो तागत तब आउँछ जब तपाईंमा आत्मबल हुन्छ । यदि आत्मबल छैन भने तपाईंले जीवनमा सफलता प्राप्त गर्न सक्नुहुन्न ।

जसै गोली चल्छ तपाईं ढल्नुहुन्छ । तर आत्मबल छ भने तपाईंले उभिएर उसलाई एक लात दिनुहुन्छ अनि उसको बन्दूक एकातिर खस्नेछ र त्यो अर्कोतिर लड्नेछ । तपाईंले उसको छातीमा टेकेर सफलता प्राप्त गर्नुहुनेछ । दुवै स्थिति तपाईंको सामु छ ।

प्रत्येक व्यक्ति भयभीत छ । जन्मदेखि मृत्युपर्यन्त उसको जीवनमा भयबाहेक अरू केही हुँदैन । भयले पछ्याइरहेको हुन्छ मानिसको जीवनलाई । टाढाबाट होइन, नजिकबाटै– आमाबाबुले उसको मनमा भय उत्पन्न गर्दछन् कि बाहिर नजाऊ सडकमा दुर्घटना हुन सक्छ, यो वस्तु नखाऊ यसबाट हानी हुन सक्छ, यस्तो गर्नाले यस्तो हुन सक्छ, त्यस्तो गर्नाले त्यस्तो हुन सक्छ । हामीले उसलाई भयबाहेक केही दिँदैनौं किनकि हामी स्वयं पनि भयबाट उत्पन्न भएका छौं । हामीले उसलाई भय दियौं त्यसैले ऊ कायर बन्यो । हामीले आफ्नो सन्तानलाई तागतवान् बनाउन सकेनौं, साहसिलो बनाउन सकेनौं ।

कुनै अस्सी किलोको मानिस मात्र तागतवान् हुँदैन । महात्मा गान्धी त जम्मा बयालीस किलोका मात्र थिए र पनि तपाईं हामीभन्दा धेरै तागतवान् थिए– अंग्रेजसँग युद्ध गरे, संघर्ष गरे । उनको वाणीमा यति धेरै तागत थियो कि हजारौं मानिस फाँसीमा चढ्न तयार भए र त्यसमा चढेर मरे पनि । कतिले गोली खाए । तपाईंले भनेर त एकजनाले पनि गोली खाने छैन, तपाईंको कुरा सुनेर एकजनाले पनि संघर्ष गर्ने छैन । तपाईंको आह्वानमा एकजना पनि क्याम्पस छोडेर सडकमा आउने छैन, एकजना पनि श्रीमतीलाई छोडेर जेल जाने छैन ।

तपाईं र गान्धीबीच यस्तो अन्तर किन ? यो घटना त पचास-साठी वर्ष अगाडिको हो ।

अन्तर यो हो कि तपाईंमा आत्मबल छैन । त्यस व्यक्तिमा आत्मबल छ– म यस्तो गरेरै छोड्छु । तपाईंमा आत्मबल छैन भने तपाईंले हुन्छ कि हुँदैन भनेर सोच्नुहुन्छ । तपाईं यत्ति भन्नुहुन्छ– म कोशिश गर्नेछु, आशा त छैन तैपनि कोशिश चाहिँ गर्छु । यहीँबाट तपाईंको भय शुरु हुन्छ । जब भय शुरु हुन्छ तब भयका साथ मृत्यु जोडिन पुग्छ किनकि भय र मृत्यु एउटै शब्द हो ।

कृष्णले पनि अर्जुनलाई यही कुरा भनेका थिए– अर्जुन, तिमी अत्यन्तै कायर छौ । तिमी भयभीत छौ, तिमीमा तागत र निर्भीकता छैन, तिमीमा क्षमता छैन, तिमीमा हौसला छैन । तिमीलाई मरण प्राप्त होस्, तिमी पहिले मर । यदि तिमी मऱ्यौ भने पनि स्वर्ग प्राप्त गर्नेछौ र जीवित रह्यौ भने विजय प्राप्त गर्नेछौ, मानिसहरूले जय-जयकार गर्नेछन् र आउने पाँच हजार पुस्ताले तिम्रो स्मरण गर्नेछन् । दुवै स्थितिमा तिमीलाई लाभ नै लाभ छ, हानी त छँदै छैन । जितेमा पनि लाभ छ, मरेमा पनि लाभ छ ।

अर्जुन युद्धका लागि तयार भए र विजय प्राप्त गरे । युद्धमा द्रोणाचार्यको पनि मृत्यु भयो । यहाँसम्म कि भीष्मको पनि मृत्यु भयो । द्रोणाचार्य त अर्जुनका गुरु थिए । तर सारा पाण्डव र श्रीकृष्ण भने जीवित रहन पुगे । उनीहरू किन मरेनन् ? कौरवहरूमा भय थियो कि हामी हार्नेछौं । हामी हार्नेछौं किनकि पाण्डवहरूको पक्षमा श्रीकृष्ण छन् । पाण्डवहरूमा पूर्ण विश्वास थियो कि उनीहरू हार्ने छैनन् किनकि श्रीकृष्ण साथमा छन् ।

यो भय र अभयबीचको स्थिति थियो । त्यो व्यक्ति जीवित रहन सक्छ जसले संघर्ष गर्न सक्दछ । जसले संघर्ष गर्ने क्षमता राख्दछ, जसले संघर्षलाई आफ्नो जीवनमा निम्तो दिन्छ, जो आफ्नो सामु संघर्षलाई बोलाएर त्योसँग भिड्दछ, उसैले सफलता प्राप्त गर्दछ । भिडाइबाट प्राप्त सफलताले असीम आनन्दको अनुभूति दिलाउँछ ।

जब कुनै संन्यासीले दीक्षा लिन्छ, गृहस्थ होइन भने निर्भीकतासँग दीक्षा लिन्छ । हामी सबै संन्यासी नै हौं । तपाईंहरूमध्ये कोही पनि गृहस्थ हुनुहुन्न किनकि श्रीमती तपाईंकी हुँदै होइन, छोरो तपाईंको हुँदै होइन, बन्धु-बान्धव पनि तपाईंका होइनन्, घर-सम्पत्ति पनि तपाईंको होइन । यदि यिनीहरू तपाईंका भइदिएका भए त तपाईंसँगै यिनीहरू पनि चितामा जल्थे । आफ्नो

साठी वर्षको इतिहासमा कमसेकम मैले त देखेको छैन कि श्रीमान् मर्दा श्रीमती पनि मरिन्, घरलाई पनि जलाइयो, रूपैँयालाई पनि आगोमा होमियो, हीरा मोतीलाई पनि चितामा हुत्याइयो । यस्तो त तपाईंले आफ्नो जीवनमा पनि देख्नुभएको छैन होला ।

म भन्दै थिएँ कि गृहस्थ भनेको हुँदै हुँदैन, संन्यास पनि हुँदैन । जसको आँखामा विकार छ, जसको आँखामा मैलो छ, जो आइमाईलाई देखेपछि कामातुर हुन्छ, उसलाई तपाईं कसरी संन्यासी भन्नुहुन्छ ? त्यो कसरी संन्यासी भयो ? कपाल पाल्नाले मात्र संन्यासी भयो ?

यसैले गृहस्थ पनि संन्यासी हो र संन्यासी पनि गृहस्थ हो । र, गृहस्थ पनि गृहस्थ होइन र संन्यासी पनि संन्यासी होइन किनकि मरेपछि दुवैको स्थिति एउटै हुन्छ । दुवै चिहानमा गाडिन्छन् वा नदीमा प्रवाहित गरिन्छन् वा जलाइन्छन्– तीन स्थितिमध्ये कुनै एउटा स्थिति बन्दछ किनकि मरेपछि त्यसलाई राखिन्न ।

निर्भयता जीवनको श्रेष्ठता हो, सत्यता हो, प्रामाणिकता हो । ती व्यक्ति जीवित रहे, ती पशु जीवित रहे, ती पक्षी जीवित रहे, कीटपतंग जीवित रहे, नभचर र जलचर जीवित रहे जसले संघर्ष गरिरहे, उनीहरू नै बाँच्न सफल भए ।

जन्मैदेखि कोही पनि महापुरुष बनेका होइनन् । उनीहरू सबै तपाईंजस्तै नै थिए । संघर्षबाट नै उनीहरू राम, कृष्ण, बुद्ध र चैतन्य बने । तपाईंले पनि संघर्ष गर्ने हो भने तपाईं राम बन्न सक्नुहुन्छ, बुद्ध बन्न सक्नुहुन्छ, चैतन्य बन्न सक्नुहुन्छ र दुई हजार, पाँच हजार वर्षसम्म पनि जीवित रहन सक्नुहुन्छ । तपाईंमा संघर्ष गर्ने क्षमता छ, यदि तपाईं निर्भीक हुनुहुन्छ

**'जहाँ गुरु हुनुहुन्छ त्यहाँ विजय हुन्छ किनकि त्यहाँ भय मेटिन्छ । गुरु प्राप्त हुनुभयो भने दैवी बल प्राप्त हुन्छ ।'**

र चुनौतीहरूलाई बोलाउनुहुन्छ, हरेक क्षण चुनौतीहरूसँग संघर्ष गर्ने क्षमता तपाईंसँग छ भने तपाईंले सफलता प्राप्त गर्न सक्नुहुन्छ । त्यसको लागि दैवी बल आवश्यक हुन्छ ।

विजयको अर्थ हो कि तपाईंको जीवनमा जुन समस्याहरू छन्, तिनीहरूमाथि सफलता प्राप्त होस् । अहिले त्यो क्षमता प्राप्त भएको छैन किनकि तपाईंले त्यस दैवी बललाई प्राप्त गर्नुभएको छैन । दैवी बललाई त परै राखौँ, तपाईंले त गुरुलाई पनि प्राप्त गर्नुभएको छैन । जब गुरुलाई प्राप्त गर्नुभएको छैन भने देवता त तपाईंको जीवनमा कहाँबाट आऊन् ।

त्यसैले तपाईंलाई विजयको आवश्यकता छ, संघर्षको आवश्यकता छ, निर्भयता आवश्यक छ र तपाईंको इच्छा पूरा गर्नु जरुरी छ ।

जहाँ गुरु हुनुहुन्छ त्यहाँ विजय हुन्छ किनकि त्यहाँ भय मेटिन्छ । गुरु प्राप्त हुनुभयो भने दैवी बल प्राप्त हुन्छ । गुरुले बुझाउन सक्नुहुन्छ कि तपाईंले जीवन किन लिनुभयो, तपाईंको लागि कस्तो साधना जरुरी छ । यसका लागि गुरु-शिष्यमा एउटा सम्झौता हुनु आवश्यक छ– विश्वासको । यो चीज तर्कको होइन, यो त श्रद्धाको विषय हो । तर्कमा न त मैले तपाईंलाई जित्न सक्छु, न त तपाईंले नै मलाई जित्न सक्नुहुन्छ । त्यसैले यो विषय तर्कको होइन, श्रद्धाको हो । विश्वास गुरूप्रति हुनुपर्दछ, आफूप्रति हुनुपर्दछ, संघर्षशील हुनुपर्दछ । जीवनमा तपाईंलाई सफलता प्राप्त होस्, सुनिश्चित विजय प्राप्त होस्, दैवी बल प्राप्त होस्, तपाईंलाई पूर्णरूपमा सफलता प्राप्त होस्, मेरो यही आशीर्वाद छ ।

## प्यारो सिद्धाश्रम

ज्ञान देऊ गुरु हामीलाई
हटाउछौँ अन्धकारलाई
आग्रह गर्छु आश्रम आई
आरती गाउनलाई
सबै मिली हटाऔँ
द्वन्द्व र अशान्तिलाई
फैलाऔँ गोरख निखिल वाणीलाई
हटाऔँ कलियुगलाई
लेराऔँ गोरख-निखिल युगलाई
अहम् र घमण्ड मान्छेको शत्रु हो
जीवन सफल पार्ने गुरुदेव हो ।
सकिन म सफल हुन
अज्ञानी छु गुरु पाउन
भौतारिँदै डुलेको छु वनपाखामा
कति खोजेँ देवी-देवताको धाममा
दुःख-कष्ट हुँदोरहेछ हजूरलाई पाउन
गाह्रो पर्दोरहेछ हजूरको शिष्य बन्न
बल्ल-बल्ल पाएँ हजूरको धाम
ज्ञानगुन दिने प्यारो सिद्धाश्रम ।

–सरला थापा
आरती सञ्चालन केन्द्र दरबारमार्ग,
गोरखा

**कण कणमा गोरख जगाऔँ ।**

# दीयो बाल्नुको गूढ रहस्य

–प्रा.डा. हरिप्रसाद गौतम

मानव मात्रले आफ्नो उद्देश्य पूर्तिको निमित्त गर्ने नित्य, नैमित्तिक एवं काम्य कर्महरूमा पूर्वसङ्कल्प गरेर दीयो बाल्नु नितान्त आवश्यक मानिएको छ वैदिक संस्कृतिमा । सोही धर्म-संस्कृतिको मर्यादा पालन गर्दै लोकमा गरिने यावत् कर्महरूमा 'पृष्ठो दिवि, स्थिरो भव' भन्ने वैदिक मन्त्र उच्चारण गर्दै दीयो बालिन्छ र 'नमोऽस्त्वनन्ताय' भन्ने वैदिक मन्त्रद्वारा नै दीयोलाई प्रणाम गरिन्छ । त्यसपछि पञ्चोपचार, दशोपचार, षोडशोपचारमध्ये कुनै एक विधिद्वारा दीयोको पूजा गरिन्छ ।

विश्वधर्म संस्कृति र सभ्यताकै मूल मानिने सर्वप्राचीन ग्रन्थ मानिएको ऋग्वेदको प्रथम मण्डलको आदिम मन्त्रमा यस विश्वब्रह्माण्डलाई नै प्राकृतिक यज्ञद्वारा निर्मित र परिचालित हुने वैज्ञानिक वस्तुतथ्य अवबोध गराउन सर्वप्रथम अग्नि तत्त्वलाई यज्ञको देवतारूप होतृरूप, रत्नादिधातृरूप ' अग्निमिडे' भनी प्रार्थना गरिएको छ ।

त्यो ज्योति तत्त्व प्रज्ज्वलित भइरहन त्यसलाई सोमतत्त्व तेलजस्ता पदार्थको अनिवार्यता हुने गर्दछ । त्यसकारण वेदले यो विश्वब्रह्माण्डलाई नै 'अग्नीषोमात्मक जगत्' भनी अग्नि तत्त्व र सोम तत्त्वको संयोजनबाट यो विश्वब्रह्माण्डको उद्भव र परिचालन भइरहेको बताएको छ, सोही विज्ञानलाई प्रकारान्तरबाट बोध गराउन वेदान्तदर्शनले शिव र शक्ति, वैष्णव चिन्तनअनुसार लक्ष्मी-नारायण नाम दिएको छ ।

वैदिक विज्ञानलाई नै आधुनिक विज्ञानले पनि प्रकारान्तरबाट सर्वत्र पछ्याएको देखिन्छ। वैदिक विज्ञानले सौर्य अग्नि तत्त्वबाट पृथिव्यादि लोक बनेको भन्छ, सोही कुरा आधुनिक विज्ञानले पनि स्वीकारेको छ। वैदिक विज्ञानले पृथ्वी, अन्तरिक्ष र द्युलोक तीनै लोकको तीन किसिमको आध्यात्मिक, आधिदैविक र आधिभौतिक वातावरण सन्तुलन विज्ञानको प्रतीक गार्हपत्य, आहवनीय र दक्षिणाग्निचिन्तनलाई अगाडि सार्दछ । सोही चिन्तनअनुसार द्युलोकमा रहनेलाई सौर्याग्नि, अन्तरिक्षस्थ अग्निवायुलाई इन्द्राग्नि, विद्युदग्नि, जलमा रहेकोलाई वरुणाग्नि, पृथिवीमा रहनेलाई अग्नि, समुद्रमा रहनेलाई वडवाग्नि, सभा सम्मेलनमा माझमा राखिने अग्निलाई सम्याग्नि भनिन्छ । सोको प्रतीक जुनकुनै सभा-उद्घाटन गर्दा दीयो बाल्ने लौकिक परम्परा रहिआएको छ । हामीभित्र रहने जीवाग्नि पनि सम्याग्निकै प्रकारान्तररूप हो । प्राणी मात्रको शरीर परिचालन गर्ने गराउने वायुप्रधान– प्राण, अपान, व्यान, समान, उदानहरू पञ्चाग्नि मानिन्छ । पाचन कार्य गर्ने अग्निलाई जठराग्नि भनिन्छ। गुप्ताङ्गमा रही गुह्य कार्यको भूमिका वहन गर्ने अग्निलाई रुद्राग्नि भनिन्छ। समय समयमा सबै कुरा बोध गर्नेलाई जातवेदाग्निको संज्ञा दिएको छ । यसरी विश्वब्रह्माण्डको उद्भवदेखि परिचालन गर्ने सम्मका अहं भूमिका अग्नि तत्त्वको रहिआएकोले हाम्रा पूर्वज त्रिकालदर्शी ऋषि-महर्षिहरूले अग्नि तत्त्व, ज्योति तत्त्व, प्रकाश तत्त्वलाई हरेक कार्य गर्दा अग्रिम सम्मान गर्दै आएका छन् । सोकै प्रतीक दीयो बाल्ने परम्परा हो ।

वैदिक चिन्तनअनुसार 'असतोऽमा सद्गमय, तमसोऽमा ज्योतिर्गमय' असत्य, अज्ञान, अन्धकारलाई परास्त गर्दै हामी मानव मात्रले ज्ञानको ज्योति व्यष्टि जगत् र समस्त समष्टि जगत्मा फैलाउनुपर्दछ भन्ने सन्देश दिन मृत्युलाई परास्त गर्दै अमर बन्न समेत सर्वप्रथम प्राच्य परम्पराअनुसार दीयो बाली पूजा सम्मान गर्ने गरिएको हो । वैदिक दीप प्रज्ज्वलन-पूजन-परम्परा अज्ञानरूप अन्धकारालई हृदयाकाशबाट हटाई ज्ञानको ज्योतिद्वारा जीवात्मालाई परमात्मासँग एकीकृत गराउन सक्ने चिन्तनको पूर्व अभ्यास हो भन्न सकिन्छ ।

यज्ञाग्नि, योगाग्नि, ज्ञानाग्नि, भक्तिदीप आदि सबै अग्निको मूल उद्देश्य सर्वप्रथम ऋग्वेदको 'मनुर्भव' भन्ने चिन्तनअनुसार सच्चा मानव बन्नु र यज्ञाग्निद्वारा तीनै लोकको तीन किसिमकै वातावरण अनुकूल गराई तीनै लोकमा रहँदा प्रत्येक जीवात्माले स्वर्गीय आनन्द पाउन सक्ने स्थिति सिर्जना गर्नु र ज्ञानाग्नि प्रज्ज्वलन गरी जीव तत्त्वलाई ब्रह्मसँग एकीकृत हुन सक्ने अवस्था सिर्जना गर्नु, योगाग्नि प्रज्ज्वलन गरी षड्चक्र भेदनद्वारा

योगी याज्ञवल्क्य, योगी गोरक्षनाथ, भगवान् श्रीकृष्ण र योगीराज भगवान् शङ्करजस्तो बन्न सक्ने हुनु, भक्तिदीप प्रज्ज्वलन गरी देवर्षि नारद एवं सनकादिजस्ता बन्न सक्ने हुनु नै वैदिक दीप प्रज्ज्वलन- पूजन परम्पराको लक्ष्य रहिआएको छ ।

आजभोलि गरिने सभा सम्मेलनमा सभा उद्घाटन गर्दा दीयो बाल्ने परम्परा पनि वैदिक सम्याग्निकै अनुकरण हो भन्न सकिन्छ । त्यस्तै आफ्नो उद्देश्य हासिल गर्न गरिने राँके जुलुस पनि ऋग्वेदीय 'अग्निमिडे'कै प्रकारन्तर रूप हो भन्न सकिन्छ । सम्पूर्ण अभिष्ट सिद्धिका लागि बत्ती त बलेकै हुनुपर्दछ भन्ने वैदिक चिन्तन साकार नहुँदा हिजोआज नेपालको सम्पूर्ण उद्योगधन्दा समेत धरासायी भएबाट वैदिक चिन्तन, विज्ञानसम्मत हो भन्ने कुरा सायद दोहोऱ्याइरहनु नपर्ला ।

दीयो बल्न जसरी सोम तत्त्व (तैलादि) को आवश्यकता हुने गर्दछ त्यसरी नै व्यष्टि जगत् र समष्टि जगत्का लागि अग्नि तत्त्व र सोम तत्त्वको समन्वय भइरहनु पर्दछ भन्ने वैज्ञानिक गूढ रहस्य बोध गराउन पनि वैदिक परम्पराअनुसार दीप प्रज्ज्वलन-पूजन-पद्धतिलाई अग्रस्थान दिई सार्वजनिकरण गरिएको हो भन्न सकिन्छ ।

दीयो बाल्नुपूर्व गर्नुपर्ने कुश, जल, स्नान, आचमनदेखि दीप पूजापछि बालिने कर्पूर दीप, गुग्गुल धूप, शंख, घण्ट वादनसम्मका सबै धार्मिक पद्धतिहरू एवं सर्स्यूं पूजा स्थानमा छर्नैपर्ने र कुशको आसन, औंठी लगाउनैपर्ने विधिहरूसम्मबाट दैवी र भौतिक दुवै वातावरण अनुकूल हुने कुरा मात्र नभई वैज्ञानिक दृष्टिले त्यसबाट मानव स्वास्थ्यको लागि समेत निकै ठूलो योगदान पुग्न सक्ने निश्चित छ ।

# गया किन जाने?

हिन्दु संस्कारअन्तर्गत गयामा श्राद्ध गर्नुको विशेष महत्त्व बताइएको छ । यसको बारेमा एउटा प्रसंग पनि पाइन्छ जुन यसप्रकार छ–

जब सृष्टिको सृजन भइरहेको थियो, तब ब्रह्माले गयासुर नामक राक्षसलाई पनि उत्पन्न गर्नुभयो । गयासुरले कोलाहल पहाडमा गएर घनघोर साधना गरे । उनको साधना देखेर इन्द्र आफ्नो सिंहासन खोसिने डरले चिन्तित भए । उनी देवताहरूलाई लिएर ब्रह्माकहाँ पुगे । ब्रह्माले उनलाई शिवकहाँ पठाउनुभयो र शिवले उनलाई विष्णुकहाँ लिएर जानुभयो ।

विष्णुले गएर गयासुरलाई भन्नुभयो– वत्स ! म तिम्रो साधनाबाट अति प्रसन्न छु, मनले चाहेको वर माग ।

गयासुर बडो कोमल हृदय भएका व्यक्ति थिए । उनले करबद्ध भएर भने– प्रभु ! म त हजूरको दर्शनबाट धन्य भइसकेको छु । तर पनि मेरो इच्छा यो छ कि मेरो स्पर्शबाट सुर, असुर, कीट, पतङ्ग, पापी, ऋषि, मुनि, प्रेत आदि पवित्र भई मुक्ति प्राप्त गरून् ।

त्यसै दिनदेखि गयासुरको स्पर्श र साक्षात्कारबाट सबै जीवहरूलाई मुक्ति प्राप्त हुन लाग्यो र ती सबै जीव स्वर्गतिर जान लागे । यसबाट इन्द्रदेव फेरि चिन्तित भए । उनी ब्रह्माकहाँ गए । ब्रह्मा सबै देवताहरूका साथ विष्णुकहाँ जानुभयो ।

विष्णुले उपायहेतु गयासुरको शरीर यज्ञका लागि माग्न ब्रह्मालाई भन्नुभयो । ब्रह्मा गयासुरकहाँ जानुभयो र यज्ञहेतु गयासुरको शरीर प्राप्त गर्नुभयो । गयासुर उत्तर दिशातिर शिर राखेर सुते । यज्ञको समापनमा सबै साना-ठूला देवताहरूका साथ ब्रह्मा पनि गयासुरको शिरमाथि बस्नुभयो । यसबाट गयासुरको भारी शरीर हल्लिन लाग्यो । उनको शरीरमा एउटा अत्यन्तै ठूलो देवनामी पत्थर पनि राखियो । तर पनि गयासुरको शरीर हल्लिन बन्द भएन । यसकारण विष्णुलाई पनि आउन कर लाग्यो । जब उहाँ देवनामी पत्थरमा चढ्नुभयो तब गयासुरको शरीर हल्लिन छोड्यो । विष्णुले तत्काल गयासुरलाई वर दिनुभयो– वत्स ! यसै देवनामी पत्थरमा सबै देवतागण सधैं रहनेछन् । यो नगर तिम्रो नामले तीर्थस्थलको रूपमा अमर हुनेछ । पितृहरूको लागि यहीं पिण्डदान दिनुपर्दछ । उनीहरू त्यहीं सारा पापहरूबाट मुक्त भएर ब्रह्मलोकबासी बन्नेछन् ।

यसकारण हिन्दु धर्मावलम्बीहरू आजसम्म पनि गयामा गएर श्राद्ध तर्पण गरेर पितृको उद्धारमा संलग्न रहन्छन् ।

जय गुरुदेव !

**यो भगवान् विष्णुको नगरी हो । गया अर्थात् गयासुरको भूमि एउटा ऐतिहासिक तथा धार्मिक शहर हो । धार्मिक विश्वास भएका हिन्दु धर्मावलम्बीहरु गयामा आएर आफ्ना दिवंगत पितृहरुको आत्म–शान्तिका लागि पिण्डदान गर्ने कामना गर्दछन् ।**

# कर्मयोग

संसारमा आएपछि मानिसले विविध कर्महरू गर्दछन् । कर्मको स्वरूपलाई बुझेपछि मात्र भगवद् चिन्तन गर्दै हामी आत्मोद्धारतिर अघि बढ्न सक्ने हुन्छौं । यही आत्मोन्नति नै मनुष्य योनिको एक मात्र लक्ष्य हो । कर्मको विविध स्वरूपलाई तल चर्चा गरौं–

१. कर्म

कर्मको अभिप्राय यो हो कि व्यक्तिले श्रुति-स्मृति प्रतिपादित विधिवत् कर्मको पालन चाहिँ गर्छ तर ईश्वरको भक्ति गर्दैन । यस्तो कर्ममा प्रमुख विचारणीय कुरा यो हुन्छ कि श्रुति-स्मृतिको विधिमा अलिकति पनि गडबडी हुनु हुँदैन, अन्यथा–

दुष्ट: शब्द: स्वरतो वर्णतो वा मिथ्याप्रयुक्तो न तमर्थमाह ।

स वाग्वज्रं यजमानं हिनस्ति यथेन्द्रशत्रु: स्वरतोऽपराधात् ॥

यदि एउटा वैदिक स्वर मात्रको पनि त्रुटि हुन गयो भने कर्मकर्तालाई लाभको सट्टा हानी हुन जान्छ। एउटा राक्षसले ऋषिहरूलाई समातेर जबर्जस्ती यज्ञ गरायो । त्यसमा मंत्र थियो– 'इन्द्रशत्रुर्विवर्धस्व' जसको अर्थ हो– इन्द्रको शत्रु अर्थात् राक्षस बढोस् । तर अक्षर त्यही राखेर पनि ऋषिहरूले एउटा स्वरलाई भने बदल्न भ्याए । राक्षसलाई वैदिक स्वरको ज्ञान नहुनाले उसले ऋषिहरूको चातुर्यलाई बुझ्न सकेन। यज्ञ सम्पन्न भयो। भगवान्‌ले पनि मंत्रानुसार फल दिने वरदान दिनुभयो । पश्चात् राक्षसले इन्द्रमाथि आक्रमण गर्‍यो । परिणामस्वरूप राक्षस मारियो । मर्ने बेलामा राक्षसले भन्यो– यो ईश्वरको समदर्शित्वमाथिको कलङ्क हो किनकि उहाँले वरदान दिएर पनि पूरा गर्नु भएन । ईश्वरले आकाशवाणीद्वारा रहस्यलाई उद्घाटन गर्दै भन्नुभयो कि 'इन्द्रशत्रुर्विवर्धस्व' मन्त्रमा जुन स्वर लगाइएको थियो त्यसको अर्थ थियो कि इन्द्रको शक्ति बढोस्, अत: इन्द्र विजयी भए । विधिहीन कर्मको फलको उदाहरण हो यो । यदि विधियुक्त कर्म सम्पन्न भएमा पनि त्यसको फल भनेको स्वर्गको प्राप्ति हो जुन नश्वर छ । त्यसैले शास्त्रोक्त विधिवत् कर्मको निन्दा गरिएको पाइन्छ ।

२. विकर्म–

विकर्म त्यसलाई भनिन्छ जसमा श्रुति-स्मृति कर्म

पनि नगरोस् र ईश्वरभक्ति पनि नगरोस् । यसमा ती नास्तिकहरू समावेश हुन्छन् जो केवल भौतिकवादी हुन्, जसलाई ईश्वर वा ईश्वरीय महापुरुषहरूप्रति घृणा हुन्छ । ती विकर्मीहरूको विकर्मको परिणाम नरकादि यातना हुन् । उनीहरूलाई स्वर्गको प्राप्ति पनि हुँदैन तथा ईश्वर प्राप्ति पनि हुँदैन । जबसम्म जीवित रहन्छन्, इन्द्रियहरूको विषयमा आसक्त हुनाले उच्छृङ्खलतावश मनोमानी कर्म गर्दछन् । मरेपछि गीताका अनुसार–

आसुरीं योनिमापन्न मूढा जन्मनि जन्मनि ।
मामप्राप्यैव कौन्तेय ततो यान्त्यधमां गतिम् ॥ (गीता १६।२०)

भगवान् उनीहरूलाई आसुरी योनिहरूमा पठाउनुहुन्छ अत: विकर्म त कर्मभन्दा पनि निन्दनीय छ । साधारणतया यसै विकर्मलाई पाप-कर्म भनिन्छ । कर्मलाई भने पुण्य कर्म भनिन्छ ।

वस्तुत: पुण्यकर्म एवं पापकर्म दुवै नै बन्धनकारक हुन्छन् । वेद भन्दछ– पुण्यबाट स्वर्गको प्राप्ति हुन्छ, पापबाट नरक मिल्दछ एवं दुवैको संयोगबाट मृत्युलोकीय देहको प्राप्ति हुन्छ । फरक यति मात्रै छ भन्ने बुझ्नुपर्दछ कि स्वर्ग सुनको जंजीरको हतकडी हो र केही दिनमा नै चौरासी लाख योनिको हतकडी लगाउनुपर्ने हुन्छ र नरक फलामको हतकडी हो । यी स्वर्ग-नरकादि लोकहरूमा केवल कर्मफल भोग्नु पर्दछ, कर्म गर्ने अधिकार भने छैन । अत:एव यी दुवै त्याज्य छन् ।

३. अकर्म–

अकर्म त्यसलाई भनिन्छ जसमा अन्त:करणबाट त ईश्वरको भक्ति गरोस् तर शरीरले श्रुति-स्मृति-विहित कर्म पनि गरोस् । यसै अकर्म वा कर्मयोगको उपदेश गीतामा अर्जुनलाई दिइएको छ । अर्जुनले युद्ध गरेमा स्वर्ग वा पृथ्वीको प्राप्ति हुन्छ, युद्ध नगेरमा त विकर्म हुन्छ र त्यसको फल नरकको प्राप्ति हुन्छ । अत: भगवान् भन्नुहुन्छ कि 'तिमीले युद्ध नगर'– यो पनि नगर अन्यथा विकर्म हुन जान्छ र 'युद्ध गर'– यो पनि नगर अन्यथा कर्म हुन जान्छ । तिमीले 'अकर्म' गर– 'तस्मात् सर्वेषु कालेषु मामनस्मर युद्धय च' निरन्तर मन ममा लगाएर कर्म गर । तात्पर्य यो हो कि मनबाट ईश्वरमा अनुराग होस् एवं शरीरबाट शास्त्रोक्त कर्म पनि होस्, यसैलाई अकर्म वा कर्मयोग कहलाइनेछ । यसमा ईश्वर-भक्तिको फल त ईश्वरको प्राप्ति हुन्छ जसमा माया-निवृत्ति एवं परमानन्द-प्राप्तिको लक्ष्य हल हुन्छ र कर्मको फल केही पनि प्राप्त हुँदैन किनकि त्यस कर्मको फल मात्र प्राप्त हुने गर्दछ जुन कर्ममा मनको लगाव रहन्छ । जब मनको लगाव भगवान्मा रहन्छ भने स्वभावत: मन कर्ममा रहँदैन । तब कर्मको फल

**राक्षसलाई वैदिक स्वरको ज्ञान नहुनाले उसले ऋषिहरूको चातुर्यलाई बुझ्न सकेन । यज्ञ सम्पन्न भयो । भगवान्‌ले पनि मंत्रानुसार फल दिने वरदान दिनुभयो ।**

पाउने वा बन्धन हुने प्रश्न नै आउँदैन । अत: अकर्म वा कर्मयोग वन्दनीय मार्ग हो ।

४. कर्मसंन्यास–

कर्मसंन्यास त्यसलाई भनिन्छ जसमा ईश्वरभक्ति त कर्मयोगीको जस्तै हुन्छ तर वेदादि-प्रतिपादित कर्म यसमा हुँदैन । यस्तो कर्मसंन्यासीले भक्तियोगको फलअनुसार ईश्वर प्राप्त गर्दछ, परिणामस्वरूप दु:ख निवृत्ति एवं परमानन्द-प्राप्तिको लक्ष्य पूरा हुन्छ । यसमा कर्म नगरिने हुनाले त्यसको फल भोग्ने अथवा नभोग्ने भन्ने प्रश्नै

उत्पन्न हुँदैन। यसप्रकार कर्मयोगीजस्तै कर्मसंन्यासी पनि शास्त्र, वेद एवं आप्त-महापुरुषहरूद्वारा वन्दनीय छ।

प्रश्न यो उठ्दछ कि कर्मयोगी एवं कर्मसंन्यासी दुवैलाई जब एउटै फलको प्राप्ति हुन्छ अर्थात् दुवैले ईश्वर-भक्ति गर्दछन्, दुवैले ईश्वर-प्राप्तिको परिणाम प्राप्ति गर्दछन् भने त कर्मयोगीको कर्म गर्ने प्रयास व्यर्थ छ। जब त्यसको कुनै फल नै मिल्दैन भने कर्मको भार किन वहन गर्ने ? भगवान् श्रीकृष्ण अर्जुनलाई सम्झाउनु हुँदै यसको उत्तर दिनुहुन्छ–

संन्यासः कर्मयोगश्च निःश्रेयसकरावुभौ।

तयोस्तु कर्मसंन्यासात् कर्मयोगो विशिष्यते॥ (गीता)

अर्थात्, अर्जुन ! कर्मयोगी एवं कर्मसंन्यासी दुवै नै कृतार्थ हुन्छन् तर पनि कर्मयोगको मार्ग कर्मसंन्यासभन्दा श्रेष्ठ छ। त्यो श्रेष्ठता के हो ?

भगवान् भन्नुहुन्छ– संसारको यो नियम छ कि मानिस ठूलाको अनुकरण गर्दछन्, ठूलाले नै सानाको मार्ग प्रशस्त गर्दछन्। यद्यपि अर्जुन ! तिमी जान्दछौ कि मेरो कुनचाहिँ प्रयोजन अवशिष्ट छ जसको लागि म कुनै कर्म गरूँ ! म त पूर्णकाम हुँ तर पनि म नै कर्म गर्दछु। कारण यो हो कि यदि मैले कर्म गरिन भने मानिसहरू मेरै अनुकरण गर्छन् जसको परिणामस्वरूप अप्ठ्यारोमा पर्न जान्छन्। अतएव म लोकहितका लागि कर्म गर्छु ताकि अनुकरण गर्नेहरूले त्यसबाट लाभ उठाऊन्। यसैले म कर्मयोगीलाई श्रेष्ठ मान्दछु।

हामीलाई शङ्का हुन सक्छ कि कर्मयोगीको अनुकरण गर्नेले जसरी ईश्वर प्राप्त गर्दछ त्यसैगरी कर्मसंन्यासीको नक्कल गर्नेले पनि त ईश्वर प्राप्ति नै गर्लान्, त्यसमा हानि र खतराको के कुरा रहन्छ ? वास्तविकता यो हो अनुकरण गर्नेहरूले सधैं बहिरङ्ग नक्कल नै गर्दछन्, अन्तरङ्ग गर्दैनन्। अब सोच्नुस् त यदि कर्मयोगीको अनुकरणकर्ता बहिरङ्ग अनुकरण गर्दछ भने त कर्मी बन्दछ, अन्तरङ्ग अनुकरण अर्थात् ईश्वर-भक्तिको अनुकरण नगर्ला। किन्तु यदि कर्मसंन्यासीको अनुकरण कसैले गर्दछ भने उसको बहिरङ्गको अनुकरण अर्थात् कर्म नगर्ने अनुकरण त गर्ला तर अन्तरङ्ग ईश्वर-भक्तिको अनुकरण नगर्ला। परिणाम यो हुन जान्छ कि ईश्वर-भक्ति एवं कर्म दुवैबाट रहित भएर विकर्मी बन्न जान्छ।

तपाईं भन्न सक्नुहुन्छ कि ठीक छ यदि हामी यो पनि मानौं कि कर्मयोगीको नक्कल गर्ने कर्मी बने एवं कर्मसंन्यासीको नक्कल गर्ने विकर्मी बने त यसमा अन्तर के छ ? कर्मीलाई स्वर्ग प्राप्त हुन्छ त्यो पनि अन्तमा दुःखदायी छ। हो, कुरा त साधारण बुद्धिले हेर्दा ठीक जस्तो छ तर पनि यति विचारणीय छ कि विकर्मीभन्दा त कर्मी श्रेष्ठ छ किनकि त्यो उच्छृङ्खल हुँदैन। जहिले उसले तत्त्वज्ञ प्राप्त गर्ने अवसर

पाउँछ तब तत्त्वज्ञले यस्तै कर्म गर्दै ती कर्महरूलाई ईश्वरार्पित गर्दै मनको लगाव ईश्वरमा गर्दै जान सुझाउँदा त्यसै अनुसारको कर्म भएमा यसबाट कर्मको फल नबन्ने हुनाले व्यक्ति कर्मयोगी बन्न जान्छ। तर विकर्मीलाई यदि कुनै तत्त्वज्ञ प्राप्त भई नै हालेछ भने पनि उच्छृङ्खल भएकोले एक त शास्त्र-वेदमा आस्था नरहेको कारण प्रथमत: त्यसले शास्त्र- वेद सत्य हुन् र अवश्यै माननीय छन् भन्ने कुरा नै स्वीकार गर्दैन। यदि कदाचित् स्वीकार नै गरिहाले पनि चिरन्तन उच्छृङ्खलताको अभ्यासको कारण ईश्वर-भक्ति आदिमा प्रवृत्ति दु:सम्भव नै हुन्छ । यसका अतिरिक्त लौकिक-सामाजिक व्यवस्था पनि कर्मद्वारा यथोचित चल्दै रहन्छ जबकि विकर्मीबाट लोकमा क्रान्तिको नै सम्भावना रहन्छ । कर्मयोग एवं कर्मसंन्यासको अनुकरणको अन्तर यही नै हो ।

हामीले बुझ्यौं होला कि ईश्वर भक्तियुक्त कर्म नै वन्दनीय छ, शेष कर्म निन्दनीय छन्, तर पनि विकर्मभन्दा कर्म राम्रो छ। एउटा अर्को कुरा पनि प्रमुखरूपमा विचारणीय छ कि जसरी कर्मीलाई वेदविहित विधिको अलिकति उल्लङ्घन हुँदा पनि दण्ड मिल्दछ तर कर्मयोगीलाई दण्ड मिल्ने त प्रश्न नै उठ्दैन अर्थात् साधक कर्मयोगीले यदि अलिकति मात्रै पनि विधिको पालना गर्नाले पनि त्यो श्रेष्ठ बनेर लाभ प्राप्त हुन्छ– स्वल्पमप्यस्य धर्मस्य त्रायते महतोभयात् । फेरि जब परिपक्व कर्मयोगी बन्न जान्छ तब कर्मफल भोग्ने प्रश्न नै समाप्त हुन जान्छ । अतएव शास्त्र, वेद एवं अन्यान्य आप्त-ग्रन्थहरूमा जुन कर्म-धर्मको खण्डन गरिएको छ, त्यो एक मात्र उनै कर्मको विषयमा हो जुन ईश्वरलाई पृथक गरेर केवल कर्मद्वारा नै कर्मबन्धनहरूलाई समाप्त गर्ने योजना बनाउँछ । तर ईश्वर-भक्तियुक्त कर्म त परम वन्दनीय छ। त्यसबाट आफ्नो त लाभ पूर्णतया हुन्छ नै साथसाथै अनुकरणकर्तालाई पनि लाभ पुग्दछ ।

(स्रोत: प्रेमरस सिद्धान्त)

# माता सीताद्वारा पिण्डदान

जब राम चौध वर्षको वनबासबाट फर्कनुभयो तब राजा दशरथको श्राद्धमा पिण्डदानका लागि माता सीता र लक्ष्मणका साथ उहाँ फल्गु नदीको किनारामा आउनुभयो । पिण्डदानको लागि केही सामग्रीको कमी हुन गएकोले रामले लक्ष्मणलाई नपुगेका सामग्री लिन पठाउनुभयो । धेरै समयसम्म पनि लक्ष्मण नफर्केको हुनाले राम स्वयं सामग्री लिन हिँड्नुभयो । भगवान् राम पनि धेरै समयसम्म नफर्कनुभएको र पिण्डदानको समय पनि बित्न लागेकोले गाई, आगो, क्यात्तुके फूल र फल्गु नदीलाई साक्षी राखेर माता सीताले पिण्डदान दिनुभयो ।

जब राम-लक्ष्मण फर्कनुभयो तब सीताले आफूले पिण्डदान दिएको बताउनुभयो । राम-लक्ष्मणलाई उहाँमाथि विश्वास भएन । सीताले भन्नुभएको हुनाले राम-लक्ष्मणले गाई, आगो, क्यात्तुके फूल र फल्गु नदीसँग सोध्नुभयो । उनीहरू चारैजनाले एकअर्काको मुख ताकेर 'होइन' भने । त्यसपछि माता सीताले रिसाएर ती चारैलाई श्राप दिनुभयो । गाईलाई 'तिमीले अपवित्र वस्तुहरूको पनि सेवन गर्नेछौ' भन्नुभयो । आगोलाई 'तिम्रो सम्पर्कमा आएर सबै वस्तु खरानी हुनेछन्' भनेर श्राप दिनुभयो । क्यात्तुके फूललाई 'देवताहरूलाई तिमी चढाउन लायक हुँदैनौ' भनेर सराप्नुभयो भने फल्गुलाई 'अंत:सलिला हुनेछौ' भनेर श्राप दिनुभयो ।

# महासरस्वती पूजन

समस्त विद्या एवं ज्ञानकी देवी सरस्वतीको उपासनाको लागि अत्यन्त महत्त्वपूर्ण दिन 'श्रीपञ्चमी' तपाईं हामीनजिक आइरहेको छ । माता सरस्वती अज्ञानरूपी अन्धकारलाई ज्ञानरूपी खड्गले नाश गर्न समर्थ हुनुहुन्छ। माता सरस्वती वाणी, बुद्धि, विद्या र ज्ञानको व्यवस्था गर्ने देवी हुनुहुन्छ। सम्पूर्ण विद्याहरू उहाँकै स्वरूप हुन् । मनुष्यलाई बुद्धि, कविता, मेधा-प्रतिभा र स्मरण शक्ति उहाँकै कृपाले प्राप्त हुन्छ । अनेक प्रकारका सिद्धान्तहरूलाई पृथक्-पृथक् गर्नु उहाँको स्वाभाविक गुण हो । उहाँ व्याख्या र बोधस्वरूपा हुनुहुन्छ। उहाँको कृपाबाट नै सम्पूर्ण सन्देह नष्ट हुन्छन्। उहाँ शक्तिस्वरूपा हुनुहुन्छ । स्वर, संगीत र ताल सबै उहाँकै स्वरूप हुन्। उहाँ विषय, ज्ञान र वाणीमय हुनुहुन्छ। उहाँले प्रत्येक वाणीलाई जीविका प्रदान गर्नुहुन्छ। उहाँ परम प्रसिद्ध एवं शान्तमूर्ति हुनुहुन्छ। उहाँको मूर्ति तपोमयी छ। तपस्वीहरूलाई फल प्रदान गर्न उहाँ सदा तत्पर हुनुहुन्छ । त्यस्तै गायन, संगीत, कला, विद्वता आदि गुणहरू पनि उहाँको कारणले नै व्यक्तिमा प्रस्फुटन हुन सक्दछ। यस्ती परमदयालु माता सरस्वतीको कृपाबाट व्यक्तिले आत्मज्ञान प्राप्त गर्दै जीवनलाई उच्चतामा पुऱ्याउन सक्दछ ।

माताको आशीर्वाद प्राप्त गर्नको लागि हामीले विविध उपक्रमहरू गर्दै आइरहेका छौं। विशेषगरी बसन्तपञ्चमी अर्थात् सरस्वती पूजाको दिनमा हामी माता सरस्वतीको मन्दिरमा दर्शन गर्ने, पूजा गर्ने, स्तोत्र पाठ गर्ने आदि कार्य गर्दछौं। धेरैजसो विद्यालयमा माताको मूर्ति स्थापना गरिएको हुन्छ र माता सरस्वतीको वन्दनापश्चात् मात्र पठनपाठन कार्य शुभारम्भ गरिन्छ। तर माता सरस्वतीको कृपा केवल विद्यार्थीहरूका लागि मात्र आवश्यक पर्ने होइन, उहाँको आशीर्वादबिना त हाम्रो जीवन अज्ञानको अन्धकारबाट कहिल्यै मुक्त हुन पाउँदैन ।

प्रत्येक साधक साधिका एवं माताको कृपा प्राप्त गर्न चाहने जो कोही व्यक्तिले पनि श्रीपञ्चमीको अवसरका साथसाथै अरू बेला पनि आफ्नो अनुकूलताअनुसार माता महासरस्वतीको पूजन गर्न सक्नुहुन्छ । पूजनको लागि स्नान गरेर शुद्ध पवित्र भई पूजन सामग्री तयार पार्नुहोस् । त्यसपछि आफ्नो अगाडि काठको पिर्कामा पहेँलो आसन ओछ्याई त्यसमाथि माता महासरस्वतीको प्राण-प्रतिष्ठित दिव्य तस्वीर तथा यन्त्र स्थापित गर्नुहोस् । **पहिले विधिपूर्वक भगवान् गणपति एवं गुरु पूजन गरेर निम्न विधिबाट मूल पूजन आरम्भ गर्नुहोस् ।**

## ध्यानः

दुवै हात जोडेर ध्यान गर्नुहोस्-

**शुक्लां ब्रह्म विचार सार परमामाद्यां जगद्व्यापिनीं । वीणा पुस्तक धारिणीमभयदां जाड्यान्धकारापहाम् ॥ हस्ते स्फाटिक मालिकां च दधतीं पद्मासने संस्थितां । वन्दे तां परमेश्वरीं भगवतीं बुद्धिप्रदां शारदाम् ॥**

**श्री सरस्वत्यै नमः ध्यानं समर्पयामि ।**

'शुक्लवर्ण, ब्रह्मस्वरूपा, आद्याशक्तिरूपा, समस्त संसारमा शक्तिरूपले व्याप्त, आफ्ना दुवै हातमा वीणा र पुस्तक धारण गर्ने, जड एवं अज्ञानलाई नाश गर्ने, स्फटिक माला धारण गरेर पद्मासनमा विराजमान, बुद्धिकी अधिष्ठात्री देवी भगवती सरस्वतीलाई म शुद्ध भावबाट नमन गर्दछु ।'

## आवाहनः

हातमा पुष्प लिएर आवाहन गर्नुहोस् ।

**चतुर्भुजां चन्द्रवर्णां चतुरानन वल्लभाम् ।**
**आवाहयामि वाग्देवीं वीणा पुस्तक धारिणीम् ॥**
**श्री सरस्वत्यै नमः आवाहनं समर्पयामि ।**

## गन्धः

चन्दन अथवा कुंकुम अर्पण गर्नुहोस् ।

**कुंकुमागरू कस्तूरी कर्पूराद्यैश्च संयुक्तम् ।**
**गन्धं गृहाण शारदे विधिपत्नि !**
**नमोऽस्तुते ॥**
**श्री सरस्वत्यै नमः गन्धं समर्पयामि ।**

## धूपः

सुगन्धित धूप बालेर देखाउनुहोस् ।

**गुग्गुल्वगरू संयुक्तं भक्त्या दत्तं विधिप्रिये ।**
**धूपं गृहाण देवेशि ! मातृमण्डल पूजिते ॥**
**श्री सरस्वत्यै नमः धूपम् आघ्रापयामि ।**

## दीपः

दीयो बालेर देखाइदिनुहोस् ।

**घृताक्तवर्ति संयुक्तं वाणि चैतन्य दीपितम् ।**
**दीपं गृहाण वरदे कमलासन वल्लभे ॥**
**श्री सरस्वत्यै नमः दीपं दर्शयामि ।**

## नैवेद्यः

मिष्ठान्न अर्पण गर्नुहोस् ।

**शर्कराघृत संयुक्तं मधुरं स्वादु चोत्तमं ।**
**उपहार समायुक्तं नैवेद्यं प्रतिगृह्यताम् ॥**
**श्री सरस्वत्यै नमः नैवेद्यं निवेदयामि,**
**ऋतुफलानि च समर्पयामि नमः ।**

## नीराजनः

नीराजन गर्नुहोस् ।

**नीराजनं नीरजाक्षि नीरजासन वल्लभे ।**
**कर्पूरखण्ड कलितं गृहाण करुणार्णवे ॥**
**श्री सरस्वत्यै नमः नीराजनं समर्पयामि ।**

## पुष्पाञ्जलिः

पुष्पाञ्जलि अर्पण गर्नुहोस् ।

**पुष्पांजलि मया दत्ता गृहाण वर्णमालिनि ।**
**शारदे लोकमातस्त्वं आश्रितेष्ट प्रदायिनि ॥**
**श्री सरस्वत्यै नमः पुष्पांजलिं समर्पयामि ।**

## नमस्कारः

दुवै हात जोडी नमस्कार मुद्रामा बस्नुहोस् ।

**या कुन्देन्दु तुषारहार**
**धवला या शुभ्रवस्त्रावृता,**
**या वीणा वरदण्डमण्डितकरा**
**या श्वेत पद्मासना ।**
**या ब्रह्माच्युत शंकरप्रभृतिभिर्देवैः**
**सदा वन्दिता,**
**सा मां पातु सरस्वती**
**भगवती निःशेषजाड्यापहा ॥**

## विशेषार्घ्यः

**अर्घ्य जल अर्पण गर्नुहोस् ।**

**अघहीने गृहाणेदम् अर्घ्यमष्टांग संयुक्तं ।**
**अम्बाखिलानां जगतामम्बुजासन सुन्दरि ॥**
**श्री सरस्वत्यै नमः विशेषार्घ्यं समर्पयामि ।**
**अनया पूजया श्री सरस्वती देवता प्रीयन्ताम्**
**ॐ तत् सत् ब्रह्मार्पणमस्तु ।**

जय गुरुदेव !

# सरस्वती स्तोत्र

या कुन्देन्दु तुषार हार धवला या शुभ्र वस्त्रावृता ।
या वीणा वरदण्ड मण्डित करा या श्वेत पद्मासना ।।
या ब्रह्माच्युत शंकर प्रभृतिभिर्देवैः सदा वन्दिता ।
सा मां पातु सरस्वती भगवती निःशेषजाड्यापहा ।।१।।
आशासु राशी भव दङ्ग वल्ली
भासैव दासीकृत दुग्ध सिन्धुम् ।
मन्द स्मितै निन्दित शारदेन्दुं
वन्देऽरविन्दासन सुन्दरि त्वाम् ।।२।।
शारदा शारदाम्भोज वदना वदनाम्बुजे ।
सर्वदा सर्वदा स्माकं सन्निधिं सन्निधिं क्रियात् ।।३।।
सरस्वतीं च तां नौमि वागधिष्ठातृ देवताम् ।
देवत्वं प्रतिपद्यन्ते यदनुग्रहतो जनाः ।।४।।
पातु नो निकषग्रावा मतिहेम्नः सरस्वती ।
प्राज्ञेतर परिच्छेदं वचसेव करोति या ।।५।।
शुक्लां ब्रह्म विचार सार परमामाद्यां जगद् व्यापिनीं ।
वीणा पुस्तक धारिणीम भयदां जाड्यन्धकारापहाम् ।
हस्ते स्फाटिक मालिकां च दधतीं पद्मासने संस्थितां ।
वन्दे तां परमेश्वरीं भगवतीं बुद्धिप्रदां शारदाम् ।।६।।
वीणाधरे विपुल मङ्गल दानशीले ।
भक्तर्ति नाशिनी विरंचि हरीश वन्द्ये ।
कीर्ति नाशिनी विरंचि हरीश वन्द्ये ।
कीर्ति प्रदेऽखिल मनोरथदे महार्हे,
विद्या प्रदायिनी सरस्वति नौमि नित्यम् ।।७।।
श्वेताब्ज पूर्ण विमलासन संस्थिते हे
श्वेताम्बरावृत मनोहर मंजुगात्रे ।
उद्यन्मनोज्ञसित पंकज मंजुलास्ये,
विद्या प्रदायिनी सरस्वति नौमि नित्यम् ।।८।।
मातस्त्वदीयपद पंकद भक्तियुक्ता,
ये त्वां भजन्ति निखिलान परान्विहाय ।
ते निर्जरत्वमिह यान्ति कलेवरेण,
भूवह्नि वायु गगनाम्बुविनिर्मितेन ।।९।।
मोहान्धकार भरिते हृदये मदीये,
मातः सदैव कुरु वासमुदार भावे ।
स्वीयाखिला वय निर्मल सुप्रभावि
शीघ्रं विनाशय मनोगतं अंधकारम् ।।१०।।
ब्रह्मा जगत सृजति पालयतीन्दिरेशः,
शम्भुर्विनाशयति देवि तव प्रभावैः ।
न स्यात्कृपा यदि तव प्रकटप्रभावे
न स्युः कथञ्चिदपि ते निजकार्यदक्षाः।।।११।।
लक्ष्मी मेंधा धरा पुष्टि गौरी तुष्टिःप्रभा धृतिः ।
एताभिः पाहि तनुभिरष्टाभिर्मा सरस्वति ।।१२।।
सरस्वत्यै नमो नित्यं भद्रकाल्यै नमो नमः ।
वेद वेदान्त वेदाङ्ग विद्या स्थानेभ्य एव च ।।१३।।
सरस्वति महाभागे विद्ये कमललोचने ।
विद्यारूपे विशालाक्षि विद्यां देहि नमोऽस्तु ते ।।१४।।
यदक्षरं पदं भ्रष्टं मात्राहीनं च यद्भवेत ।
तत्सर्वं क्षम्यतां देवि प्रसीद परमेश्वरी ।।१५।। ❑

# परमपूज्य सद्गु

# कर्मकाण

*(परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू (परमहं बिताउने सौभाग्य वेताल भट्टले पाउनु भएको थियो । आफूले देखे लगन, प्रेम र प्रयोगबारेका सन्दर्भहरुलाई उहाँले हृदयंगम गर्नुभयो 'मन्त्र रहस्य' पुस्तकबाट साभार गरी प्रकाशित गरिएको छ ।)*

कर्मकाण्ड वा यज्ञ पद्धति एउटा स्वतन्त्र र पूर्ण विज्ञान हो । केही देशमा यो विज्ञान अत्यन्तै उच्च स्तरमा विकसित भइसकेको भए पनि यसमा बिस्तारै-बिस्तारै ह्रास आउन लागेको छ । नयाँ पुस्ताले यस प्रकारको कार्यलाई केवल ढोंग, अन्धविश्वास र पाखण्ड ठान्न लागिसकेका छन् । तर यो कुरा उनीहरूको हीन मनोवृत्ति र क्षीण बुद्धिको परिचायक हो ।

कार्मकाण्डको सीधा सम्बन्ध वेदोक्त मन्त्रहरूसँग छ । तर यसमा अत्यन्तै धेरै जटिलताहरू छन् र जबसम्म ती जटिलताहरू एवं रहस्यहरूलाई बुझ्न सकिँदैन तबसम्म यसप्रकारको कार्यमा पूर्णता आउन सक्तैन ।

यसमा सानोभन्दा सानो कुराको पनि निश्चित प्रमाण पाइन्छ । यसमा प्रत्येक कुराको विशेष ध्यान राखिन्छ । यज्ञको वेदीमा कतिवटा खण्ड हुनुपर्छ, प्रत्येक खण्डको चौडाइ कति हुनुपर्छ, वेदीको सबैभन्दा माथिको आधारको लम्बाइ-चौडाइ कति हुनुपर्दछ तथा त्यो आधार कूर्मपृष्ठीय हुनुपर्ने हो कि समतल, यज्ञको वेदीको मुख कुन दिशातर्फ हुनुपर्दछ, त्यसमा प्रज्ज्वलित गरिने अग्निको नाम के हो, कुन तरीकारले त्यसको आवाहन गर्नुपर्दछ, यसका लागि कुन प्रकारको मन्त्रको विधान रहेको छ, यज्ञमा कुन-कुन सामग्रीको उपयोग गर्नुपर्दछ, कुन कार्यका लागि कुन प्रकारले यज्ञ गर्ने हो आदिजस्ता अत्यन्तै चिन्तनयोग्य कुराहरू हुन्छन् । प्रत्येक कार्यको लागि भिन्दाभिन्दै हवन सामग्रीको परिमाण शास्त्रहरूमा निर्देशित छ । तिल, जौ आदिको योग कति मात्रामा हुनुपर्दछ भन्ने अनेकौं जटिलताहरू छन् र जबसम्म यी सबै जटिलताहरूको ज्ञान हुँदैन तबसम्म यज्ञमा पूर्णता र सफलता प्राप्त हुन सक्तैन ।

मलाई आश्चर्य लाग्छ, कर्मकाण्डको क्षेत्रमा पनि परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू सिद्धहस्त हुनुहुन्थ्यो र यस क्षेत्रमा उहाँको कार्य अथवा उहाँको मान्यतालाई पण्डित समाजले मान्यता दिन्छ । यदि कुनैबेला केही समस्या आयो भने श्रीमालीज्यूसँग सम्पर्क राख्दा उहाँले जुन आधार वा मान्यता प्रदान गर्नुहुन्छ, त्यो नै विद्वत् समाजमा प्रामाणिक मानिन्छ । उहाँले यस क्षेत्रमा जे जति कार्य गर्नुभयो त्यो आफैमा आश्चर्यजनक छ ।

यसपटक मलाई करिब एक महिना उहाँसँग बस्ने अवसर प्राप्त भयो । त्यो एक महिनामा संयोगवश मैले दुई-तीनवटा विशेष यज्ञहरूमा भाग लिन पाएँ जुन श्रीमालीज्यूद्वारा संचालित थिए । ती यज्ञहरूमा उहाँले पूर्ण समर्पित भावबाट कार्य गरिरहनु भएको थियो । यज्ञ प्रारम्भ गर्नुभन्दा अगाडि सानोभन्दा सानो कुराको पनि उहाँले विचार गर्नुहुन्थ्यो र प्रत्येक कार्यको पछाडि शास्त्रोक्त आधार हुन्थ्यो ।

मलाई विजय यज्ञमा भाग लिने अवसर प्राप्त भयो जसमा

# गुरुदेव
# ...डीको रूपमा

*...स स्वामी श्री निखिलेश्वरानन्द महाराज) को सहचर्यमा केही समय ...े-भोगेका कुराहरुलाई र पूज्यपादले कर्मकाण्डप्रति देखाउनुभएको ... र उहाँले आफ्नो हृदयमा संगालेका अमूल्य प्रसंगहरुलाई गुरुदेवको*

मैले केही नवीन अनुभूति गरेँ । त्यो यज्ञ एउटा विशेष कार्यका लागि सम्पन्न गरिँदै थियो । एकजना सज्जन चुनावमा पूर्ण सफलता प्राप्त गर्न चाहन्थे । चुनावमा पूर्णरूपमा सफलता प्राप्त भएन भने त आफ्नो प्रतिष्ठामा ठूलै आघात पुग्ने कुरामा उनी सशंकित थिए । फलस्वरूप उनले गुरुदेवको निर्देशनमा विजय यज्ञ सम्पन्न गरेर मात्र चुनावमा भाग लिने निश्चय गरे ।

यस यज्ञमा एक सयजना पण्डितहरूको आवश्यकता थियो । पूर्ण शुद्ध उच्चारण भएका पण्डितहरूलाई मात्र यस यज्ञमा सहभागी गराउने श्रीमालीज्यूको चाहना थियो जसबाट कार्यमा निश्चितरूपले सफलता प्राप्त हुन सकोस् । अत: उहाँले यज्ञ शुरु गर्नुभन्दा अगाडि नै ती पण्डितहरूको परीक्षा लिने निश्चय गर्नुभयो । प्रत्येक पण्डितलाई एक दुईवटा मन्त्रको उच्चारण गर्न लगाइयो र यसैबाट उसको उच्चारण कति प्रामाणिक छ भनेर निर्णय गरियो ।

यसमा मलाई पनि भाग लिने अवसर प्राप्त भयो । श्रीमालीज्यूले यज्ञमा छानिएको पण्डितलाई सामान्य नियमभन्दा पाँच गुणा धेरै दक्षिणा र अन्य धेरै सुविधाहरू पनि दिने घोषणा गर्नुभएको थियो । यस स्वार्थबाट प्रेरित भएर करिब तीन हजार पण्डितहरूले भाग लिए । यी सबै पण्डितहरू आ-आफ्नो क्षेत्रमा विद्वान् मानिन्थे तर प्रतियोगितामा उच्चारण शुद्ध भएका केवल बयालीस जना पण्डितहरू मात्र छानिन सकेको देख्दा मलाई केही दु:ख लाग्यो । जो पण्डितहरू छानिएका थिए, तिनीहरूको उच्चारण ज्ञान मात्र प्रामाणिक मानिएको थियो । यज्ञको मूल सिद्धान्तलाई उनीहरूले कति बुझेका थिए भन्ने कुरा फेरि बेग्लै थियो । मेरो विचारमा यदि यज्ञको विधि-विधानलाई लिएर पण्डित छनौट गर्ने हो भने त केवल दुई-तीन जना मात्र छानिने थिए । बाँकी पण्डितहरूले पनि कर्मकाण्ड गरेरै आफ्नो जीविका चलाएका थिए, सबै पण्डित समर्थ थिए, आ-आफ्नो क्षेत्रमा मान्यता प्राप्त थिए, यजमानहरू उनीहरूबाट कार्य गराएर सन्तुष्ट हुन्थे र पण्डितहरू पनि यत्तिकैमा आफ्नो कार्य पूरा भएको मान्दथे तर सफलता कति प्राप्त भयो भन्ने विचारणीय हुन्थ्यो किनकि यज्ञ र मन्त्रको मूल आधार नै ध्वनि हो, स्पष्ट र शुद्ध उच्चारण हो । यदि उच्चारण नै दोषयुक्त छ भने कार्यमा सफलता पाउन सम्भव हुँदैन ।

वर्तमान समयमा पनि पण्डितहरूको अनिकाल देखेर श्रीमालीज्यू अत्यन्तै निराश देखिनुभयो । उहाँलाई यस कुरामा निकै दु:ख लाग्यो । आगामी दिनमा त झन् कस्तो स्थिति होला, किनकि नयाँ पुस्ताले यसप्रकारको कार्यमा रुचि लिएको पाइँदैन वा यस प्रकारका कार्यहरूलाई उनीहरूले अनुकूलरूपमा लिइरहेका छैनन् ।

समाजले यस कार्यलाई ब्राह्मण वर्गको हातमा सुम्पेको छ तर नयाँ पुस्ताका ब्राह्मणपुत्रहरू भने यस कार्यभन्दा नोकरी गर्दा नै गौरव मानिरहेका छन् । आफ्ना पूर्वजहरूको थातीलाई सम्हाल्न आफूलाई असक्षम पाइरहेका छन् । उनीहरूको रुचि नै यस प्रकारको कार्यमा छैन भने फेरि यो

विज्ञान कुन प्रकारले जीवित रहन सक्छ र नयाँ पुस्तालाई यस प्रकारको ज्ञान कसरी हस्तान्तरण गर्न सकिन्छ ?

सम्भवत: त्यसै क्षणमा श्रीमालीज्यूले निर्णय लिनुभयो– एउटा यस्तो प्रतिष्ठानको प्रारम्भ गर्नु आवश्यक भइसकेको छ जहाँ यस प्रकारको ज्ञानलाई प्रामाणिकताका साथ दिन सकियोस्। ब्राह्मण पुत्रले मात्र होइन, कुनै पनि व्यक्तिले यस ज्ञानको शिक्षा प्राप्त गर्न सक्दछ। खाँचो छ केवल प्रतिभा अनि यस प्रकारको ज्ञानलाई सिक्ने प्रबल इच्छाको।

यज्ञको माध्यमबाट खाद्य पदार्थको नाश हुन्छ भन्नु हाम्रो अज्ञानता हो। वैज्ञानिक दृष्टिबाट हेर्ने हो भने यज्ञको प्रभाव निश्चय पनि छ किनकि यज्ञमा जुन सामग्री अग्निलाई चढाइन्छ, त्यसको एउटा निश्चित अनुपात हुन्छ र त्यस अनुपातबाट विशेष प्रकारको धूवाँ वायुमण्डलमा फैलिन्छ जसको प्रभाव जनमानसमा अनुकूलरूपमा पर्दछ।

यसका साथसाथै मन्त्रको विशेष प्रभाव पनि अवश्यै पर्दछ। सामान्यरूपमा जुन कार्य गर्न असम्भव लाग्दछ, त्यही कार्य मन्त्रको माध्यमबाट सजिलैसँग गर्न सकिन्छ।

त्यस विजय यज्ञमा एउटा पण्डितको रूपमा मैले पनि भाग लिएको थिएँ। त्यहाँ मैले देखें कि वास्तवमा यज्ञ विधान एउटा जटिल क्रिया हो जसमा प्रत्येक कार्यको लागि निश्चित विधान बनेको छ। कुनै पनि कार्य गर्दा जे मनमा आयो त्यही गरिँदैनथ्यो, श्रीमालीज्यूको निर्देशनमा सही तथा व्यवस्थितरूपमा कार्य सम्पन्न हुन्थ्यो। उहाँको धारणा अर्थोपार्जन थिएन किन्तु उहाँको इच्छा र भावना यो थियो कि यस विज्ञानले पुन: समाजमा मान्यता प्राप्त गर्न सकोस्, मानिसहरूको आस्था यस विज्ञानप्रति होस्, मानिसहरूले यसको महत्त्वलाई बुझून् र आफ्नो जीवनलाई सुखमय बनाउनका लागि पूर्वजहरूद्वारा निर्दिष्ट यसप्रकारका कार्य वा उपायको उपयोग गरून्।

यज्ञ एक्काइस दिनसम्म चल्यो। प्रत्येक दिन एउटा निश्चित तरीकाबाट कार्य सम्पन्न गरिन्थ्यो। प्रत्येक दिनको कार्य अघिल्लो दिनको कार्यभन्दा फरक थियो। जसले यज्ञ भनेको केवल अग्निमा पदार्थलाई जलाउनु हो भन्ने ठानेका छन्, उनीहरू एकदमै भूलमा छन्। वास्तवमा यो कार्य अत्यन्तै जटिल छ। यदि सही प्रकारले यसको उपयोग गरिन्छ भने हाम्रो जीवन अवश्य पनि धेरै सुखमय बन्न सक्छ।

उहाँको प्रेरणाबाट मैले कैलाश आश्रममा पनि त्यस्ता विद्यार्थीहरूको चयन गरेको थिएँ जो कर्मकाण्ड र यज्ञ पद्धतिलाई सिक्न उत्सुक थिए र यस लुप्त विद्यालाई समाजमा

पुन: प्रतिस्थापित गर्ने कार्यमा योगदान दिन इच्छुक थिए।

विजय यज्ञजस्तै अनेकौं प्रकारका यज्ञका विधान शास्त्रमा पाइन्छन् र प्रत्येक यज्ञको परिपाटी, त्यसको विधान, शैली आदि सबै फरकफरक हुन्छन्। उदाहरणको लागि सन्तान प्राप्तिका लागि पुत्रेष्टि यज्ञ, शत्रुहरूमाथि विजय प्राप्त गर्नका लागि विजय यज्ञ, घरमा सुख-शान्ति र प्रसन्नताको वातावरण बनाइराख्नका लागि शान्ति यज्ञजस्ता अनेकौं यज्ञहरूका विधान पाइन्छन्। यदि यी यज्ञहरूलाई सुयोग्य पण्डितहरूको निर्देशनमा सम्पन्न गरिएमा निश्चय नै सफलता प्राप्त हुन्छ।

उहाँले कुराकानीको क्रममा भन्नुभयो– वेदोक्त मन्त्रहरूको मुख्य उपयोग एकातर्फ आत्मकल्याण हो भने अर्कोतर्फ समाजलाई सुखमय बनाउनका लागि पनि यसको ठूलो योगदान छ। यी समस्त मन्त्रहरूको राम्रोसँग सङ्ग्रह गरेर आजको युगको परिवेशअनुसार ती मन्त्रहरूको चयन गरेर समाजसमक्ष सरल विधिबाट राखिएमा समाजले यसबाट धेरै लाभ उठाउन सक्छ।

श्रीमालीज्यूका अनुसार कर्मकाण्डसँग सम्बन्धित जति पनि ग्रन्थ छन्, ती सबै संस्कृतमा भएकोले सामान्य मानिसहरूले यसबाट लाभ लिन सकिरहेका छैनन्। यदि यी सारा जटिलताहरूलाई सुबोध र सरल शैलीमा लेखिए समाजको लागि धेरै उपयोगी हुन सक्दछ। जय गुरुदेव !

*परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौं । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।*

## सन्ताउन्नौ भाग

बाबु पद्मनाथ, सम्प्रदायका मूल प्रवर्तक त आदिनाथ भगवान् शिव नै हुनुहुन्छ । तर जगत्मा यसको प्रचलन मेरा गुरु मच्छिन्द्रनाथद्वारा भयो । त्यसपछि जालन्धरनाथ, चौरङ्गीनाथ, नागनाथ, भरथरिनाथ र मबाहेक विशिष्ट योगी यस नाथसम्प्रदायमा आविर्भूत (उत्पन्न) भएका हुन् । बाबु, राम्ररी बुझ्नू कि म गोरखनाथको नाम जुन यति प्रचलित भएको छ, त्यो सबै मेरो गुरुभक्ति र गुरुदेवको दयाको फल हो । यसका अलावा कपिल, मार्कण्डेय, याज्ञवल्क्य आदि हठयोगका उपदेष्टाका समान नाथयोगीहरूमा पनि कोही देह सिद्धिको लागि रस प्रयोग गरेर, कोही-कोही वायु प्रक्रियाद्वारा, कोही विन्दु सिद्धिको लागि अलग-अलग उपायको नै सहारा लिन्छन् । यी सबै उपाय योग-प्रक्रियारूपमा परिगणित हुन्छन् । हामी सबै नाथयोगी गण लोकोत्तर योग सिद्धिका अधिकारी हौं । तर यस कुरालाई पनि सबैले स्वीकार गर्छन् कि महाज्ञानलाई नबुझीकन कार्य सिद्धिको कुनै पनि मार्ग छैन र यो नै हाम्रो मुख्य सिद्धान्त पनि हो । परपिण्डबाट लिएर स्वपिण्डसम्म समस्त पिण्डहरूको ज्ञान सम्पन्न भएपछि नै परमपदमा समरसता प्राप्त हुन्छ । तर आत्मविश्रान्तिले सिँचिएको पिण्डको समरसी भाव असम्भव छ । यसको लागि प्रथम विश्रान्ति हुनुपर्छ । यस विश्रान्तिको कारण स्वयं सद्गुरु नै हो । गुरुवाक्य वा दृष्टिद्वारा नै जुन शिष्यको चित्तले विश्रान्ति सम्पादन गर्दछ, विश्रान्तिपछि परमपदको साक्षात्कार पनि आवश्यक छ । यो साक्षात्कार केही दु:साध्य त अवश्य छ तर विश्रान्त चित्तको लागि धेरै कुरा आवश्यक छ । परमपदको साक्षात्कारपछि परमपद र आफ्नो पिण्डमा सामरस्य गरिदिनु पनि जरुरी छ । तब अत्यावश्यक निरुत्थान दशाको उदय हुनेछ । परमपद स्वसंवेद्य एवं वाक्य तथा मनको अगोचर हुन्छ । यो महत्त्वपूर्ण सिद्धि प्राप्त गरेपछि नै योगीहरूले आफ्नो स्वरूपको अनुसन्धानको इच्छाबाट नै आफ्नो आवेश प्राप्त गर्छन् र निरुत्थानको दशालाई प्राप्त गर्दछन् । सच्चिदानन्द-चमत्कारको अद्भुत आकार समूहको प्रकाश, प्रबोध परमपद प्रवेश आदि क्रमैबाट बिस्तारै-बिस्तारै प्राप्त हुन जान्छन् । यस अनुभवको फलस्वरूप आफ्नो पिण्डको सिद्धि प्राप्त हुन जान्छ र आफ्नो पिण्डद्वारा नै परमपदको एकाकारत्व प्राप्ट हुन्छ । यस मार्गमा ज्ञानको उल्लेख छ कि सहज संयम जसले पाउँछ र यसलाई साध्छ, यिनको अविर्भावको फलस्वरूप प्रकृष्ट निरुत्थान दशाको पूर्वांगरूपबाट आत्मविश्रान्ति सुलभ हुन्छ । आत्मविश्रान्ति दिने शक्ति केवल गुरुमा नै हुन्छ । जो शिष्य गुरुले देखाएको पथमा चल्दछ ऊ स्वयं संवेद्य वस्तुलाई देख्न सक्दछ । परमात्मास्वरूप

सद्गुरुको दयादृष्टि नै सबै प्रकारबाट कल्याणको मूल हो । योगीले सबै प्रकारका सिद्धिहरूलाई त्यागेर र स्वात्मैक वेद्य निरुत्थान दशालाई प्राप्त गरेर नै आफ्नो पिण्डलाई समरस गर्न सक्छ । पहिले निजावेश उत्पन्न हुन्छ, त्यसपछि महानन्द दशा अभिव्यक्त हुन्छ र साथसाथ नै अमल प्रकाशको आविर्भाव (उत्पत्ति) पनि हुन्छ । यसपछि निखिल भेद (सबै भेद) विगलित भएर अभेदमय चैतन्यभासक, परमपदको उन्मेष हुन्छ । त्यसै अनुभवको फलस्वरूप आफ्नो पिण्डको सम्यक् ज्ञान भएपछि परमपदमा आफ्नो पिण्डको निर्वाण हुन्छ अर्थात् आफ्नो किरणपुञ्ज निजरूपमा साक्षात्कृत हुन्छ । यो अवधूत गीतामा पनि वर्णित छ । समतत्त्व यसैको नाम हो । सर्वसङ्कल्प वर्जन र परब्रह्म दशा पनि यसैको दोस्रो नाम हो । महाज्ञानद्वारा नै परमशून्य योग मिल्दछ । आदिनाथ भगवान् शिव हुनुहुन्छ, यो ज्ञान मेरा परमगुरु मच्छिन्द्रनाथलाई दिइएको थियो जुन मैले उनै गुरुदेवको दयाबाट प्राप्त गरेको थिएँ ।

सिद्धयोगीहरूको नामावलीमा धेरै नाम पाइन्छन् । मेरो एक नाम रस सम्प्रदायको ग्रन्थमा पनि तिमीलाई मिल्नेछ । त्यसैमा चौरासी सिद्धहरूको नाम पनि लेखिएको छ । जस्तो कोही सन्मार्गमा सिद्ध छन्, त कोही हठयोगद्वारा र कसैले तान्त्रिक प्रक्रिया वा विन्दु साधनाद्वारा नै सिद्धि पाएका छन् । सबै सिद्धान्तमा एक योगीको पहुँच पुग्नु असम्भव नभए पनि अत्यन्तै कठिन भने अवश्य छ । सूक्ष्मदृष्टिबाट हेरेमा सबै मार्गमा एक ब्रह्ममार्ग नै हो जो शून्य पदवीको नामबाट प्रसिद्ध सुषुमण नामक मध्यमा अवस्थित छ जसको वर्णन यस प्रकार छ–

प्राचीनकालमा वज्रयान मार्गमा गमनशील साधकहरूको भावबाट प्रभावित भएर नाथयोग मार्गले केही विशिष्टता प्राप्त गरेको हो जसमा कार्य सिद्धिको लागि अत्यन्त गुप्त चन्दको साधन नामक उपायको सहारा लिन्छन् । यस मतबाट सापेक्ष र निरपेक्ष द्विविध अमरतत्त्व स्वीकृत हुन्छ । सापेक्ष अमरतत्त्व वास्तवमा नाथ निरञ्जन पद लाभ हो र यही नै पूर्णता हो ।

सापेक्ष अमरत्त्व सिद्धपद लाभ नै हो । अमृत धाराको लावण र त्यसबाट देह-संजीवन नै हर प्रकारको अमरता प्राप्त गर्ने उपायरूपमा वर्णित छ । अधोमुख सहस्रदल कमललाई ऊर्ध्वमुख गरेर त्यस कमलको अमृतबाट मनलाई अभिषेक गर्नु आवश्यक छ । त्यहाँ प्रणवको ध्यान गर्नु पनि परम आवश्यक छ । ब्रह्मरन्ध्र र त्रिवेणीको द्वार पनि बन्द गर्न आवश्यक छ । यस उपायको अवलम्बनबाट सुधार गरेर फेरि तल झर्न सकिन्न । योगीहरूले बताए अनुसार यो क्रिया चन्द्रभेदको नामबाट प्रचलित छ । यहाँ यो जान्न पनि आवश्यक छ कि देहरस अमृतरूपमा परिणत भएर ऊर्ध्वगामी वायुद्वारा माथितिर जान्छ र सहस्रारमा संचित हुन जान्छ । यसरी चार प्रकारका चन्द्र स्वीकृत छन्– आदि चन्द्र १, निजचन्द्र २, उन्मद चन्द्र ३ र गरल चन्द्र ४ । रसात्मक निज चन्द्रलाई खिचेर आकाश चन्द्रको योजना गर्न परम आवश्यक छ । ऊर्ध्व गतिको कारण रस अमृतरूपमा परिणत हुन जान्छ । आकाश चन्द्र सहस्रारबाट संलग्न भएर योगीले यस रूपमा गरल चन्द्रको पान गर्दछ । गरल चन्द्रको पान र प्रणवको ध्यान पनि आवश्यक छ । गरल चन्द्रद्वारा देह र मनको शोधन र संजीवन हुनाले सिद्ध देहको प्राप्ति हुन्छ ।

महायानी बौद्धहरूले काम साधनको उपदेश दिएका छन् । उनीहरूको भनाइ छ– पर प्रज्ञा लाभको लागि बोधिसत्व भूमिमा प्रवेश गर्नुपर्छ र भूमिभेद गर्न पनि आवश्यक छ । यसको प्राप्तिबाट प्रज्ञा पारमिताको प्राप्ति हुन्छ । त्यही बुद्धत्व संपादक महाज्ञान हो । जबसम्म प्रल्कृष्ट अज्ञान रहन्छ तबसम्म पूर्णत्व प्राप्त गर्न सम्भव छैन एवं संयक संबोधी पनि मिल्दैन । बोधिसत्वको कार्यसम्मत देतवावस्थाबाट नै उत्पन्न हुन्छ । तान्त्रिक बौद्ध मतबाट कोही-कोही रसात्मक विन्दुलाई बोधिचित्त भन्छन् । यसलाई चतुर्दश कमलमाथि उष्णिम कमलमा स्थापित गर्नु योग साधनाको नै फल हो । षट्चक्र भेद जस्तै उत्थापन क्रिया अत्यन्तै कठिन छ । पहिले विन्दुलाई तलको चक्रमा स्थित गर्नु जरुरी छ । त्यसपछि निर्वाण चक्रबाट त्यसलाई महासुख चक्रमा उठाउनुपर्छ । त्यहाँ बोधिचित्तको उदय हुन्छ जुन कर्म मुद्राको स्थान हो । उद्भवको तात्पर्य हो क्षोभ– त्यसपछि क्षुब्ध विन्दु अवधुति नामक मध्य मार्गबाट संचारित गर्नुपर्छ । क्षुब्ध विन्दुको माथि जाने मार्गमा भिन्न-भिन्न आनन्द आस्वादित हुन्छ । विन्दुको अधोगमनमा पनि आनन्दको अभिव्यक्ति अवश्य हुन्छ । तर त्यो अस्थायी र मलीन हुन्छ । यसकारण त्यो त्याज्य छ । विन्दुको अधोगतिको फलबाट जसरी कामदेवको उत्पत्ति हुन्छ, त्यसरी नै त्यसको ऊर्ध्वगमनबाट दिव्य देह प्रकट हुन्छ । ३३४ काया साधनको विषयमा यो जान्नु परम आवश्यक छ कि जसमा कुनै पनि प्रकारबाट विन्दुको अधः स्खलन नहोस् अन्यथा मृत्यु अवश्यम्भावी छ । विन्दुको ऊर्ध्वगतिको सम्पादनबाट नै काम साधन सम्पन्न हुन्छ । स्वभावतया विन्दु मलयुक्त हुन्छ । त्यस अशुद्ध विन्दुलाई बोध तान्त्रिक गण संवृति बोधि चित्तको नामबाट अभिहित गर्छन् । अशुद्ध विन्दुमा भूमि

प्रवेशको सामर्थ्य हुँदैन । यसको लागि ऊद्वारा भूमि भेद पनि सम्भव छैन । यसको लागि बुद्धत्व लाभ टाढाको कुरा हो । यसकारण सबैभन्दा पहिले शोधन शक्ति र निरोध शक्तिद्वारा नै विन्दुको अधोगतिलाई रोध (रोक्नु) गर्नु आवश्यक छ । त्यसपछि कर्म मुद्राबाट ऊर्ध्वस्त्रोत खुलेपछि अमरताको मार्ग सिद्ध हुन्छ । यहीँबाट बुद्धभावको उदय हुन्छ । निर्वाण चक्रमा विन्दुको गति र स्थितिको फलस्वरूप जुन कायको उदय हुन्छ त्यसको नाम निर्वाण काय हो । विन्दुको ऊर्ध्वगमनका साथसाथ आनन्दको पनि तारतम्य हुन्छ । अवधूति मार्गको सहारा लिएर बोधिचित्त जब धर्मचक्रसम्म उठ्दछ तब आनन्द परमानन्दमा परिणत हुन्छ । निर्वाण चक्रमा जुन कर्म मुद्रा छ, धर्म चक्रमा पनि त्यही मुद्रा हो । यस्तो अवस्थामा बोधिचित्त योगीबाट शिरोदेशमा रहन्छ । यसपछि उत्कर्ष लाभ पाएपछि सम्भोग चक्रमा विरामानन्दको अनुभव हुन्छ । यस समयको मुद्राको नाम महामुद्रा हो । परमानन्द र विरामानन्दी क्रमश: भव र निर्वाणरूप हो । यस समयको मुद्रा कार्यकारिणी हुन्छ । तर यो पनि पूर्णता लाभकारी होइन । यहाँ क्लेश आवरणको क्षेय-आवरणको निवृत्ति हुन्छ तथा भव र निर्वाण एकाकार हुन जान्छ । यसबाट माथि महासुख चक्रमा सहजानन्दको उपलब्धि हुन्छ । त्यस समय अहंबोध कतै लुप्त हुन जान्छ ।

हरि ॐ तत्सत् । क्रमश:

जय गुरुदेव !

**तान्त्रिक साधना**
**तान्त्रिक ध्यान**
**मानव जीवनको**
**वास्तविक ज्ञान ।**

# मन्त्र जपमा यस्तो भयो...

२०६३ साल श्रावण महिनाको अन्तिम हप्तामा सिद्धाश्रम शक्ति केन्द्रको चितवनस्थित क्षेत्रपुर सम्पर्क कार्यालयमा भगवान् शिव साधना सम्पन्न भएको थियो । उक्त साधनामा मैले पनि सहभागी हुने सौभाग्य प्राप्त गरेको थिएँ । शिव साधनामा प्राप्त मन्त्र जप गर्ने क्रममा एकदिन (०६३ सालको श्रीकृष्ण जन्माष्टमीका दिन) मलाई भगवान् गणेशसहित शिव-पार्वतीले हावामा उडाएर घुमाउन थाल्नुभयो । त्यसरी उडाउने क्रममा म जन्मे-हुर्केको (मेरो घर तनहुँ जिल्ला रिस्ती गा.वि.स. १ सोतीवेशी) घरको पूर्वतर्फको घना जङ्गलमा लगेर ३/४ पटक घुमाउनु भयो । एक ठाउँमा देखाएर 'यहाँ खनी-खोस्री गरेर खोज' भन्नुभयो । त्यसबेला मैले 'यस्तो जङ्गलको भीरमा म केही नजानेको व्यक्तिले कसरी खन्ने ? न त म अल्लारेले भनेको कसैले पत्याउँछ' भन्दा उहाँहरूले 'गुहारेर भए पनि खोज न' भन्नुभयो । अनि मैले 'हजूरले यस गाउँका सबैको मन परिवर्तन गराएर ल्याइदिनु भएमा उहाँहरूलाई सम्झाएर खोज्नेछु' भनेपछि त्यहाँबाट माथि बसाहास्थान भन्ने डाडामा लगेर बसाहामा राखिदिनुभयो र भगवान् गणेश, शिव-पार्वती तीनैजना नजिकैको बेलको रूखमा चढेर बस्नुभयो । (उक्त स्थानमा बेलको रूख भने हाल छैन ।) उहाँहरू रूखको माथिल्लो टुप्पोमा पुग्दा कतै त्यो हाँगा भाचिएर लड्नु पो हुने हो कि भन्ने डरले म रून थालेँ । पछि कति बेला मलाई चितवनस्थित घरमा ल्याएर राखिदिनु भएछ । त्यसपछि म झसङ्ग भएँ । मेरो शरीरमा पूरै करेन्ट लागेको जस्तो भइरहेको थियो ।

मैले उक्त जङ्गलमा खनी खोस्री गर्नू भन्ने आदेशको यथार्थता के होला भनी खोजी-अनुसन्धान गर्दै जाँदा त्यहाँ परापूर्वकालमा भगवान् शिवको ठूलो मन्दिर रहेको र सँगै माताको (दुर्गा भगवतीको) पनि आराधना हुने, दैनिक हवन, स्तोत्र, कवचको पाठ र अन्य पूजा गर्ने गरिएको ठाउँ भएको र सो स्थानमा हाल पनि त्रिशूल, कमण्डलु, चिम्टा, साथै शिवलिङ्ग समेत रहेको भन्ने बुझिन आएको छ ।

जय गुरुदेव !

साधक मुक्तिचन्द्र अधिकारी
चितवन

# आत्मिक निवेदन

आत्मीय पाठकवर्ग,

'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध, पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ । भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ । तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईँहरुबाटै भइसकेको छ । पत्रिकालाई युगौँ-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ ।

प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ । अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौँ ।

पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईँले कम्तिमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ । तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताका लागि प्रेरित गर्न सक्नुहुन्छ ।

यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनहरुलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ । यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ ।

यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो । यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ— आफूलगायत कम्तिमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौँ ।

यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौँ ।

वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस् । त्यसपछिको बाँकी काम हामी गर्नेछौँ ।

अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौँ एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौँ । यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौँ ।

संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ । त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौँ र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौँ ।

पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो ।

अस्तु ।

# जीवन-प्रेम

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'प्रेम धार तलवार की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

प्रेम गर्न चाहने तिमी पहिलो व्यक्ति होइनौ र प्रेमको भाषा थाहा पाउने पहिलो व्यक्ति पनि तिमी होइनौ । जो पनि इष्टकहाँ पुगे, जसले इष्टको साक्षात्कार गरे उनीहरूले प्रेमको पहिलो क, ख, ग, घ सिकेका थिए... यसैले म तिमीलाई निर्जीव, बेस्वाद जीवनको अपेक्षा आनन्ददायक रसतिर अग्रसर गरिरहेको छु । यो सिक्ने क्रियामा तिमीले धेरै नै कष्ट झेल्नुपर्ला, यो कुरा अवश्य हो । मीरा भन्छिन्–

आँखडिया झाइं पडी, पंथ निहारी-निहारी,
जीभडल्या छाला पडया राम पुकारी-पुकारी ।

मेरो आँखा त बाटो हेर्दाहेर्दै थाकिसकेको छ, म हर क्षण हेरिरहेकी छु, जुनसुकै बेला पनि कृष्ण आउन सक्छन् । एक क्षणका लागि पनि आँखा झिम्काउन चाहन्न । के थाहा, आँखा झिम्काएकै बेलामा कृष्ण आएर फर्केर जाने पो हुन् कि ? अनि मैले जीवनभरि प्रतीक्षा मात्रै गर्नुपर्ने हो कि ? म कृष्णसँग पूर्णरूपमा एकाकार हुन चाहन्छु । म पूर्णरूपमा आफैलाई कृष्णमा मिलाउन चाहन्छु, आफूलाई नै मेटाउन चाहन्छु, जीवनलाई पूर्णता दिन चाहन्छु । यो जीवनको एउटा रस हो, एउटा आनन्द हो ।

मीराको यस भनाइको पछाडि उनको भावभूमि छ, बोधगम्यता छ, श्रेष्ठता छ । उनी ध्यान जान्दिनथिन्, उनी उपासना पनि जान्दिनथिन्, जीवनको चिन्तन पनि उनी जान्दिनथिन्, उनलाई कर्मकाण्डको कुनै ज्ञान थिएन, अनुष्ठानको माध्यमबाट कुनै पूर्णता प्राप्त गरेकी थिइनन्........ तर आजसम्म मीरा जीवित छिन्, तिमीभन्दा पनि राम्रो तरीकाले, किनकि मीराको ओठमा गुनगुनाहट थियो, एउटा खुशी थियो, एउटा मोहक रस थियो ।

त्यसैले उनले जिउन सिकिन्... तर हामीले जिउन सिकेका छैनौँ... हामीले केवल जीवनलाई घिसार्न सिकेका छौँ, हामीले जीवनलाई घिसारिरहेका छौँ । जसले जीवनमा प्रेम गर्न सक्दैन, जसले जीवनमा प्रेमको रस चाखेको छैन, जो आफ्नो प्रेमीका लागि बलिदान भएको छैन, जसले आफैलाई मेटाएको छैन, उसले जीवनलाई जानेकै छैन, उसले जीवनको आनन्द लिएकै छैन ।

लैला मजनूको प्रेमबारे त सयौँ मानिसले चर्चा गर्छन्

किनकि मजनूको आँखामा केवल लैला बसेकी थिइन् । लैलाको रङ कस्तो थियो ? तिनी होची थिइन् कि मोटी, काली थिइन् अथवा दुब्ली-पातली थिइन्, त्यो कुरा बेग्लै थियो । किनकि एउटी स्त्रीको सौन्दर्यको आधारमा हेर्ने हो भने लैला काली थिइन्, दुब्ली पातली थिइन्...... तर मजनूका लागि भने तिनी सबैथोक थिइन्, ईश्वर थिइन्, पैगम्बर थिइन्, जीवनको सर्वस्व थिइन्, जीवनको सार थिइन् किनकि मजनूले प्रेमको आनन्द चाखेका थिए, उनले लैलाको रूप र रसलाई हेरेका थिएनन् ।

प्रेम गर्नेले शरीरलाई हेर्दैन, प्रेम गर्नेले जीवनको पूर्णता र श्रेष्ठतालाई देख्तैन । प्रेम त हृदयबाट गरिन्छ जहाँ प्रेमरूपी समुद्रमा आफैलाई डुबाउने क्रिया हुन्छ ।

–त्यसबेलाका राजाले मजनूलाई बोलाए र आफ्नो महलका अत्यन्तै सुन्दरी दासीहरूलाई बाहिर उभ्याए... एकसेएक सुन्दरी... कोहीभन्दा कोही कम थिएनन्......... पूरा रूप र यौवनले भरपूर ।

राजाले मजनूलाई भने– तेरो कारणले पूरै शहरमा बदनामी भइरहेको छ । तेरो कपडा च्यात्तिएको छ, ढुंगाले लागेर तेरो शरीरको ठाउँ-ठाउँमा घाउ भएको छ, मानिसहरूले तँमाथि अत्याचार गरे, ढुंगाले हिर्काए तर तँ अझै 'लैला लैला' भनेर चिच्याइरहेको छस्, यसबाट ठूलो बदनामी भइरहेको छ । यी उभिएका दस-बाह्रजना दासीहरूमध्ये कसैलाई रोजेर विवाह गर ।

मजनूले एक छिनका लागि सबैलाई हेरे, प्रत्येक दासीको आँखामा हेरे, फेरि राजालाई हेरेर हाँसे ।

राजाले सोधे– के भयो तँलाई ? किन हाँसिरहेको छस् ?

मजनूले भन्यो– यीमध्ये लैला कुनचाहिँ हुन् ? यिनीहरू त लैला होइनन्, यिनीहरू त माटोका मूर्तिजस्तै हुन्... म त लैलासँग प्रेम गर्छु, माटोको मूर्तिसँग हैन... मेरा लागि त केवल लैला मात्र छिन् ।

राजाले भने– लैलामा त्यस्तो के विशेषता छ ?

मजनूले भन्यो– जुन दिन तपाईं मजनूको आँखाबाट लैलालाई हेर्नुहुन्छ त्यसै दिन तपाईंलाई थाहा हुनेछ कि लैला के हुन् भनेर... उनी एउटा सुगन्ध हुन्... सुवास हुन्... पुष्प हुन् ।

मजनूका आँखाले ती सबै हेरिरहेका थिए र लैला पनि आफैलाई उनको प्रेममा डुबाउनका लागि आतुर थिइन् । यद्यपि समाजको बन्धन थियो... समाजको जंजीरले उनको पाउ बाँधेको थियो । राजाको कुरा नमान्नाले मजनू गाउँबाट निकालिँदैछ भन्ने कुरा जब उनले सुनिन्, उनी अत्यन्तै छटपटाइन्, मजनूबिना जिउने कसरी ?... ऊबिना जिउने अस्तित्व कहाँ छ ?... किनकि प्रेममा दूरी रहनै सक्दैन, एक-अर्कोसँग अलग हुनै सक्दैन, समाजको जंजीरले पनि रोक्न सक्दैन ।

...र लैला गएर त्यो बाटोमा उभिइन्, जुन मोडबाट मजनू गाउँनिकाला भइरहेका थिए । लैला रूखको हाँगामा कसैले नदेख्ने गरी लुकेर उभिइन् । उनी केवल मजनूलाई हेर्न चाहन्थिन्...... अघाउन्जेल ।

–मजनू नजिकै आइपुगे । तिनी रूखमा टाँसिएर उभिइरहिन्, एक क्षणका लागि पनि चलिनन्, बेचैन आँखाले मजनूलाई हेरिरहिन्, मजनूको छविलाई हृदयमा समेटिरहिन् ।

मजनू त आफ्नो बाटो हिँडे, विवशता थियो, तर उनको ओठमा लैलाको बाहेक कुनै नाम थिएन । एक वर्ष बित्यो... दुई वर्ष बित्यो र मजनू फर्केर आए, त्यही बाटोबाट गाउँमा फर्केर आए... त्यसबेलासम्म राजाको मृत्यु भइसकेको थियो ।

उनले गाउँलेसँग सोधे– लैला कहाँ छिन् ?

गाउँलेले भने– लैला त त्यो दिन बाटोमा उभिएकी थिइन्– त्यही रूखमा टाँसिएर ।

–मजनू दौडेर त्यो रूखनजिक पुगे... उनले देखे लैलाको मासु, लैलाको छाला त्यस रूखको हाँगामा टाँसिएर एकसमान भइसकेको थियो... उभिएरै टाँसिएकी थिइन्... एकाकार भइसकेकी थिइन् रूखसँग... उनको आँखामा एउटा सपना तैरिरहेको थियो मजनूको.... आँखा पत्थरसमान भइसकेको थियो, उनको प्राण त निस्किसकेको थियो... तर मजनूले ती आँखामा हेर्दा त त्यहाँ उनले आफ्नै प्रतिबिम्ब देखे, आफ्नै झलक देखे । क्रमश: जय गुरुदेव !

आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौं । कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ । यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ । यसका बाँकी अंशहरूलाई धारवाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ ।

# स्वर्गलोकमा अप्सरासँग भलाकुसारी

.....उनले पनि मतर्फ नै हेरेको बखत (क्षण) परेछ । मेरो आँखाबाट एक प्रकारको सूक्ष्म तरङ्ग उनीतर्फ गइरहेको थियो । उक्त तरङ्ग मैले देखिरहेको थिएँ । उनी (अप्सरा) बाट पनि मतर्फ एक प्रकारको तरङ्ग (सूक्ष्म शक्तिजस्तो) आइरहेको थियो । मबाट निस्केको शक्ति सीधै उनको आँखाबाट भित्र प्रवेश गरिरहेको थियो । त्यसैगरी उनबाट निस्केको शक्ति सीधै मेरो आँखाभित्र प्रवेश गरिरहेको थियो । मलाई एक प्रकारको आनन्दको अनुभूति भइरहेको थियो । त्यसप्रकारको आनन्दको परिभाषा मसँग छैन । खै, कसरी व्यक्त गरूँ ? यस्तो खालको आनन्द जसको कुनै सीमा छैन, शरीररूपमा व्यक्त गर्नका लागि स्थूल शरीरको माध्यमबाट त्यस्तो खालको आनन्द प्राप्त गर्न नै सकिँदैन । शायद ऋषिमुनि र साधुसन्तहरूले भन्न खोजेको आनन्द यही नै हो कि, के हो ? तुलना गर्न म सक्दिन । यस्तो असीम आनन्दमा म डुबिरहेँ । अखण्ड आनन्दमा म डुबेँ । शायद उनीलाई पनि यस्तै भएको होला भन्ने मैले ठानेँ किनकि यस क्षणको सृजना हुनुमा उनी पनि भागीदार छिन् । चाहेर, नचाहेर मैले यस आनन्दको रसास्वादन गरिरहेँ, उनी पनि सरीक भइरहिन् । धेरै समय बितिसकेको जस्तो आभास भयो । मेरा आँखाबाट शक्ति निस्कन छोडेजस्तो लाग्यो । जति मात्रामा आँखाबाट शक्ति निस्कन छोड्दैथियो, मेरो आनन्दको मात्रा पनि कम हुँदै गयो । अन्त्यमा आनन्द प्राप्त हुन छोड्यो । त्यसपछि मात्र म झल्याँस्स भएँ । यो के भएको हो ? मैले ठम्याउन सकिन । यसप्रकारबाट म उनीसमक्ष नजीक हुन पुगेँ । साथै उनी पनि मसँग ज्यादै नजीक भइन् । मभित्र विभिन्न जिज्ञासाहरूले घर गर्न थाले । कहिलेकाहीं यस्ता जिज्ञासा उत्पन्न हुन्छन् जसको निराकरण नै भेटाउन सकिँदैन । हो, त्यस्तै प्रकारका जिज्ञासाहरू आउन थाले । अन्त्यमा मैले उनी (अप्सरा) लाई नै सोध्ने प्रण गरेँ कि यसप्रकारको आनन्दलाई के भनिन्छ ? यस क्रियाको नाम के हो ? फेरि यसलाई प्राप्त गर्न सकिन्छ कि सकिँदैन आदि-आदि अनेकौं जिज्ञासा भनौं वा प्रश्न मैले एकैपटकमा उनीसमक्ष राखेँ ।

यस परिघटनाबाट उनी पनि ज्यादै नै खुशी एवं आनन्दित भएकी मैले पाएँ किनकि उनी मेरो जिज्ञासालाई तृप्त पार्नको लागि साह्रै व्यग्र थिइन् । भन्नुको तात्पर्य यसप्रकारको व्याख्या गर्नका लागि उनी आतुर थिइन् । बेलाको (समयको) रफ्तारमा प्रत्येक घटना घटित हुने रहेछ । त्यसैगरी प्रत्येक रहस्य थाहा पाउनको लागि पनि समय कुर्नुपर्ने हुँदोरहेछ । अब मेरो श्रवण गर्ने पालो आयो भने तिनको (अप्सराको) भन्ने पालो आयो । तिनको मुखारविन्दबाट निस्केको ध्वनि स्वयंमा कर्णप्रिय एवं सम्मोहित गर्ने खालको थियो । तिनले धाराप्रवाहरूपमा भन्दै गइन्, "यस विराट् ब्रह्माण्डमा रहेका अनन्तकोटि आत्माहरूको लक्ष्य नै आत्मानन्द प्राप्त गरी आफ्नो आत्माको अवस्थालाई सुदृढ पार्दै माथि लग्नु हो । यसै क्रमको खोजीमा आत्माले विभिन्न शरीर धारण गर्दछ । कहिले मनुष्य देह धारण गर्दछ, कहिले दैवी शरीर धारण गर्दछ । वास्तवमा स्वर्ग, मर्त्य, पाताललगायत जे जति प्रकारका सृष्टि, जगत् छन्, यिनीहरू सबै आत्माहरूका कार्यक्षेत्र हुन् । कुनै आत्मा उन्नतखालका हुन्छन् । कुनै आत्मा त्यसभन्दा माथिल्ला खाल (तह) का हुन्छन् । अनि कुनै आत्मा तीभन्दा पनि कम खालका (तहका) हुन्छन् । यसरी आत्माको क्षमता फरक हुनासाथ कार्यक्षेत्र पनि अलग-अलग हुन थाल्यो । वास्तवमा शास्त्र वचनमा उल्लिखित विषयवस्तुभन्दा धेरै भिन्न छन् यी दिव्यलोकहरू । शास्त्र त केवल आत्माहरू, त्यसमा पनि पृथ्वीलोक (मनुष्य लोक) का लागि मात्र हुन्, केही मात्रामा आत्मामा प्रवेश गरी अन्तरजगत्को भ्रमणका लागि केही सहयोगी मात्र हन् । ती सबै पूर्ण भने होइनन् । पूर्ण त केवल ज्ञान मात्र हुन् । आत्माले उन्नत अवस्था प्राप्त गर्नासाथ आत्मशक्तिको प्राप्ति हुन्छ । यसबाट आत्मविश्वासको जन्म हुन्छ । आत्मविश्वासले व्यवहारको खोजी गर्दछ । व्यवहार हुनु नै क्रिया हो । यसबाट क्रियायोगको जन्म हुन्छ ।

**गुरु प्राप्त गर्नु वास्तवमा ब्रह्माण्ड प्राप्त गर्नु वा सोसरह हुन आउँछ । सारा देवलोकवासी गुरु प्राप्तिका लागि लालायित रहन्छन् । प्रत्येक देवीदेवताको शक्ति र सिद्धि प्रथमतः गुरुशक्तिबाट प्राप्त हुन्छ । त्यसपछि मात्र देवीदेवताले आफ्ना भक्तमाथि कल्याण गर्न समर्थ हुन्छन् ।**

क्रियायोगबाट तत्त्वयोगको जन्म हुन्छ । तत्त्वयोगबाट अनेकौं रूप, रङ्गको जन्म हुन्छ । यिनीहरू शिवारूप हुन् । यसलाई 'क्रियान्वयी' पनि भनिन्छ । तत्त्वयोगबाट कुनै पनि रूप, रङ्ग आदि केही पनि जन्मिएनन् भने त्यो शिवरूप हो । यसलाई 'क्रियान्मोक्ष' भनेर भनिन्छ । क्रियान्मोक्षपश्चात् जीवको (आत्माको) मोक्षसम्बन्धी परिकल्पना सम्भव हुन्छ र अनि मात्र 'वृहन्मोक्ष'को पालो आउँछ । मैले वास्तविक कुराको रहस्य खोल्नको (थाहा दिनको) लागि जे जति बताएँ, यी सबै सूक्ष्मलोकमा अवस्थित शास्त्र वचनजस्तै हुन् किनकि यसको सहयोगबाट यसभन्दा माथिल्लो अवस्था प्राप्त गर्न सजिलो हुन्छ । हुन त मैले हजूरलाई जे बताएँ, जे जति क्रियाको लागि साथ दिएँ, ती सबै केवल गुरु इच्छामा मात्र सम्भव हुन्छन् । प्रत्येक घटना घटित हुनु स्वयंमा क्रियारूप हो । एउटा आत्मा (जीव) मा जब आत्मविश्वासको जन्म हुन्छ,

तत्पश्चात् व्यवहारको खोजी हुन्छ । चाहे त्यो स्थूल, सूक्ष्म जेसुकै होस्, त्यस व्यवहाररूपलाई क्रियारूप भनिन्छ । क्रियारूपबाट क्रियायोगको जन्म हुन्छ । जब क्रियायोगको शुरुआत हुन्छ, जीवले (आत्माले) अगाडि बढ्नको लागि मार्ग प्राप्त गर्दछ । त्यही मार्गको रूपरेखाको चित्रण स्वरूपको व्याख्या हो यो । त्यसमा पनि केवल सैद्धान्तिक कुरा मात्र हुन् । प्रयोगात्मकरूपमा जान सक्ने, नसक्ने त्यो केवल आत्माको स्वमामला हो । जे होस्, हजूर भाग्यमानी हुनुहुन्छ । महान् गुरुहरूको साथ केवल उहाँहरूको कृपाबाट मात्र सम्भव हुन्छ । गुरु प्राप्त गर्नु वास्तवमा ब्रह्माण्ड प्राप्त गर्नु वा सोसरह हुन आउँछ । सारा देवलोकवासी गुरु प्राप्तिका लागि लालायित रहन्छन् । प्रत्येक देवीदेवताको शक्ति र सिद्धि प्रथमतः गुरुशक्तिबाट प्राप्त हुन्छ । त्यसपछि मात्र देवीदेवताले आफ्ना भक्तमाथि कल्याण गर्न समर्थ हुन्छन् । देवीदेवता कुनै एउटा ब्रह्माण्डमा मात्र आसीन हुन सक्छन् । तर गुरु त अनन्तकोटि ब्रह्माण्डमा एकैसाथ अनेक रूपमा आसीन हुनुहुन्छ । सम्पूर्ण देवीदेवता रिसाएमा गुरुले कल्याण गर्न सक्नुहुन्छ तर गुरु रिसाएमा उक्त शिष्यको कल्याण सम्भव छैन भनेर शास्त्र वचनमा

उल्लेख छ । यस विषयमा यही रहस्य छ । देवीदेवता भनेका सिद्धि, शक्तिका माध्यमरूप मात्र हुन् । मनुष्यमा हुँदा यी शक्तिहरू भावनामा व्याप्त भएर कार्य गर्दछन् र आफ्ना शक्तिहरू क्रमश: भक्तहरूलाई दिँदै जान्छन्, आस्तिकहरूका बीच भावरूपबाट विचरण गर्छन्, नास्तिकहरूका बीच कर्मरूपबाट विचरण गर्छन्, सजीवहरूका बीच रङ्गरूपबाट विचरण गर्छन्, निर्जीवहरूका बीच अदृश्य रूपबाट विचरण गर्छन् र माध्यमरूप अपनाउँछन् । यसप्रकारबाट देवीदेवताले आफ्ना कार्य सम्पादन गर्दछन् र गुरु आदेशको पालना गर्दछन् । आफ्ना भक्तहरूको देहको माध्यमबाट गुरु प्राप्तिको चरणमा नजिकिन्छन् । (अप्सराले) जसरी व्याख्या गर्न खोजे पनि, बुझाउन खोजे पनि गुरु प्राप्ति सर्वश्रेष्ठ प्राप्ति हो भन्न खोजेको मात्र हुँ मैले । अन्य कुराचाहिँ अवसर परेमा हजूरसमक्ष म अवश्य पनि प्रकट (व्यक्त) गर्नेछु । व्याख्यानमा त्रुटि भए मलाई क्षमा गर्नुहोला । समारिस्तान !!!" त्यसपछि तिनी (अप्सरा) चुप बसिन् । केही समय त म पनि चुपचाप बसेँ । उनले केही बोल्छिन् अनि सुनौँला भनेर प्रतीक्षा गरी बसेँ । तर केही विषयवस्तु नै फुरेन उनीबाट । तैपनि म चुपचाप नै बसिरहेँ । उनी चुप बसेकी हुनाले मैले पनि के त्यत्तिकै फाल्तु बस्ने भन्ने सोचेर ध्यान अवस्थामा अमिरण प्रक्रियामा लिप्त भएँ ।

मलाई एकाएक शरीरको याद आयो । सम्पूर्ण ध्यान प्रक्रिया शरीर (स्थूल शरीर) मा केन्द्रित भयो । मेरो शरीर त बिरामी परिरहेको रहेछ । विभिन्न निहुँ र बहानामा भोग्नुपर्ने भोग कटाइरहेको रहेछ । तर पनि हरहमेशा गुरुमन्त्र स्मरण गरिरहेको पाउँदा भने मलाई साह्रै आनन्दको अनुभूति भयो । साथै मलाई बोध हुँदै आयो कि मलाई मेरो शरीरले यति राम्ररी साथ दिएको हुनाले नै मैले सूक्ष्ममा विचरण गर्न पाएँ । मलाई भक्कानो फुटेर आयो । मैले खप्न (सहन) सकिन । म तुरुन्त आफ्नो देहभित्र प्रवेश गरेँ । वास्तवमा मेरो स्थूल देह मेरो लागि योग्य भएको पाएर पनि सधैँ यहीँ जकडेर के बस्नुजस्तो लागिरह्यो । तैपनि आफू बस्नुपर्ने घर (शरीर) भएको हुनाले राम्ररी नै बस्ने निधो गरेँ । तुरुन्त मैले स्थूल देहलाई सुताएँ । उहाँलाई साह्रै पीडा भएको रहेछ । धेरै नकारात्मक शक्तिले उहाँमाथि हमला गरेको रहेछ । स्वप्नेश्वरी देवीको सहाराले मैले उहाँलाई यस्तो सपनामा पुऱ्याएँ कि उहाँले आफू मरेको अनि उक्त लास (शव) बोकेर घाटमा लगेको र चितामाथि राखेर जलाएको दृश्य देख्न सक्नुभयो । शवलाई जलाउँदा म (आत्मा) चाहिँ शवमाथि बसेर हेरेको, आफ्ना नातागोतालाई याद गरिरहेको सपना प्रतीत गराएँ । यस घटनाबाट उहाँमा (स्थूल देहमा) व्याप्त खराब शक्ति अग्निमा भस्मीभूत भएर गए । त्यसपछि मैले सम्पूर्ण शक्ति र सिद्धि उहाँको स्थूल देहमा प्रविष्ट गराएँ । उहाँ लामो श्वास तानेर बल्ल ब्यूँझनु भयो, आफूलाई पूर्णरूपबाट स्वस्थ भएको पाउनुभयो । उहाँ तुरुन्त नै उठेर गुरुको ध्यान गर्न लाग्नुभयो । म त्यतिबेला नै आवश्यक परेमा तुरुन्त फर्कने वाचामा गुरुसँग बिदा मागेर आफ्नै यात्राको गन्तव्य स्थलमा जाँदा त मैले आफूलाई ध्यानमा नै लिप्त भएको पाएँ । मेरो यात्रा क्रममा 'सूक्ष्म यान' र अप्सरा थिइन् । उक्त यान अब गन्तव्यतिर आइसकेको रहेछ । कहिलेकाहीँ आत्मा र शरीरको तालमेलमा केही सन्तुलन नमिल्दा आत्माले आफ्नो गति पकड्न खोज्दा शरीरले केही भार थाम्नुपर्ने हुँदोरहेछ र कहिलेकाहीँ शरीरले गति लिन खोज्दा आत्माले भार थाम्नुपर्ने हुँदोर हेछ । कुनै-कुनै घटनाबाहेक आत्माले आफ्नो यात्रा क्रममा जाँदा स्थूल शरीरलाई ज्यादा असर पर्दो रहेनछ । त्यसो भनेर स्थूल शरीर पूर्णरूपले फ्रेश (ताजा) चाहिँ हुँदो रहेनछ । कहिलेकाहीँ अलि गर्मीको आभास हुने हुँदोरहेछ । क्रमश: जय गुरुदेव !

# आफ्नो हात आफै हेरौँ

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौँ । प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा बुध पर्वतको बारेमा चर्चा गरिएको छ । यो लेख पढेर तपाईँ पनि आफ्नो हातमा रहेको बुध पर्वतको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ । यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।

## बुध पर्वत

चित्रमा देखाएजस्तै कान्छी औँलाको फेदमा जुन भाग फुलेको देखिन्छ, त्यही बुध पर्वत हो । यो पर्वत भौतिक सम्पदा एवं भौतिक समृद्धिको सूचक हो । यसैले आजको युगमा यसको विशेष महत्त्वपूर्ण स्थान छ । बुधप्रधान व्यक्तिले आफ्नो जीवनमा जुन कार्यमा हात हाले पनि पूर्णरूपमा सफलता प्राप्त गर्दछ । यस्तो व्यक्ति उर्बर मस्तिष्क एवं तीक्ष्ण बुद्धि भएको तथा परिस्थितिलाई राम्रोसँग बुझ्ने खालको हुन्छ । उसले कुनै पनि कार्य योजनाबद्ध ढङ्गबाट गर्दछ र जस्तोसुकै कार्य प्रारम्भ गरे पनि पूर्णतासम्म पुऱ्याउँछ ।

बुध पर्वत धेरै फुलेको राम्रो मानिँदैन । जुन हातमा बुध पर्वत आवश्यकताभन्दा बढी विकसित हुन्छ, त्यो व्यक्ति चलाख र धूर्त हुन्छ तथा यस्तो व्यक्ति अरूलाई धोका दिनमा पनि माहिर हुन्छ । यदि बुध पर्वत सामान्यरूपमा विकसित छ भने र त्यसमा वर्गाकारको चिह्न देखिन्छ भने त्यो व्यक्ति अत्यन्तै माथिल्लो स्तरको अपराधी हुन्छ । यस्तो व्यक्ति नियम कानून उल्लंघन गर्नमा विश्वास राख्दछ तथा अस्थिर मतिको यस्तो व्यक्ति समाजविरोधी कार्य गर्नमा चतुर हुन्छ ।

जसको हातमा बुध पर्वत सही रूपमा विकसित हुन्छ त्यो मनोविज्ञानको क्षेत्रमा माहिर हुन्छ तथा सामुन्ने उपस्थित मानिसलाई कुन प्रकारले प्रभावित गर्नुपर्दछ भन्ने कुरा राम्ररी बुझ्ने हुन्छ । यस्तो व्यक्तिले व्यापारिक कार्यमा विशेष सफलता प्राप्त गर्दछ ।

जसको हातमा बुध पर्वत विकसित हुन्छ त्यस्तो व्यक्ति पूर्णतः भौतिकवादी मानिन्छ । धन संचय गर्नमा यस्तो व्यक्तिले उचित, अनुचित आदिको कुनै ख्याल राख्दैन । दर्शन, विज्ञान, गणित आदि कार्यहरूमा यस्तो व्यक्तिले विशेष रुचि लिन्छ तथा ऊ जीवनमा श्रेष्ठ वकील, श्रेष्ठ वक्ता अथवा श्रेष्ठ अभिनेता हुन्छ । लेखनको क्षेत्रमा पनि उसले प्रसिद्धि पाउँछ । ऊ यात्रा गर्नमा सौखीन हुन्छ । यस्तो व्यक्तिले जीवनमा सफलता प्राप्त गर्दछ ।

यदि बुध पर्वतले आवश्यकताभन्दा धेरै उचाइ लिएको छ भने यस्तो व्यक्ति धनको पछि पागल हुन्छ । जसरी हुन्छ धन संचय गर्नुलाई नै जीवनको उद्देश्य ठान्छ । यदि बुध पर्वत सूर्यतर्फ झुकेको छ भने जीवनमा सरलताका साथ पूर्ण सफलता प्राप्त गर्दछ । साहित्यकार,

वैज्ञानिक आदिको हातमा यस्तै बुध पर्वत देख्न सकिन्छ । यदि व्यक्तिको हातमा हत्केला लचिलो छ तथा त्यसमा बुध पर्वतको पूरा उचाइ छ भने उसले आफ्नै प्रयत्नबाट लाखौं रूपैँया संग्रह गर्दछ । यदि हातमा बुध पर्वत विकसित छ भने आविष्कार तथा वैज्ञानिक कार्यमा उसको रुचि हुन्छ । यदि कान्छी औँलाको टुप्पो चुच्चो छ तथा बुध पर्वत विकसित छ भने त्यस्तो व्यक्ति वाक्पटु हुन्छ । यदि कान्छी औँलाको टुप्पो वर्गाकार छ भने व्यक्तिमा तर्क-बुद्धिको बाहुल्यता रहन्छ । चेप्टो टुप्पोले भाषण-कलामा विशेष दक्षता प्रदान गर्दछ । यदि कान्छी औँला छोटो छ भने व्यक्ति सूक्ष्म बुद्धि राख्ने हुन्छ । लामो कान्छी औँला तथा विकसित बुध पर्वत छ भने त्यो व्यक्ति स्त्रीहरूप्रति विशेष आसक्ति राख्ने हुन्छ । यदि यो औँला गाँठो परेको छ भने यस्तो व्यक्ति दृढ संकल्पको धनी हुन्छ । यदि हातका औँलाहरू लामो तथा पछाडिपट्टि मोडिएको छ भने यस्तो व्यक्ति धोका दिनमा विशेष माहिर हुन्छ । यदि बुध पर्वत हातको बाहिरतिर झुकेको हुन्छ भने त्यस्तो व्यक्तिले व्यापारको क्षेत्रमा विशेष सफलता प्राप्त गर्दछ । यदि बुध पर्वत आफैमा पूर्णत: श्रेष्ठ र विकसित छ भने यस्तो व्यक्तिले पूर्ण सफलता प्राप्त गर्न सक्दछ । क्रमश: जय गुरुदेव !

## माघ महिनामा पर्ने चाडपर्व

| | |
|---|---|
| माघ १ गते | **तान्त्रोक्त महालक्ष्मी हवन**, मकर संक्रान्ति<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन-पोखरा** |
| माघ २ गते | **तान्त्रोक्त बगलामुखी हवन**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन-दमौली** |
| माघ ५ गते | अष्टमी व्रत, गोरखकाली पूजा |
| माघ ६ गते | **श्री शिव गोरक्ष हवन** |
| माघ ७ गते | **तान्त्रोक्त वटुक भैरव हवन** |
| माघ ८ गते | **दिव्य गुरु महोत्सव**, षड्तिला एकादशी व्रत |
| माघ १० गते | प्रदोष व्रत |
| माघ १८ गते | सरस्वती पूजा, वसन्त पञ्चमी |
| माघ २१ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| माघ २३ गते | भीमा एकादशी व्रत |
| माघ २५ गते | प्रदोष व्रत |
| माघ २७ गते | श्री स्वस्थानी व्रत समाप्ति |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

## गुरु वाणी

**तिमी किन भय र चिन्तामा जीवन बिताउँछौ? किन तिम्रो अनुहारमा उदासीनताको रेखा छ? किन तिम्रो आँखामुनि कालो दाग छ? अनि किन छ तिम्रो सारा शरीर निचोरिएजस्तो, थाकेजस्तो र निर्जीव? आखिर कसरी भयो तिम्रो जीवनमा भयको आगमन? म त तिमीसँगै बसेको छु। मलाई बोलाएर त हेर, एकपटक पुकारेर त हेर, भय स्वयं हटेर जानेछ। जहाँ म छु, त्यहाँ भय हुनै सक्तैन। जहाँ म छु, त्यहाँ तनाव, चिन्ता, बाधा एवं अड्चन हुनै सक्तैन, त्यहाँ व्यथा र उदासी हुनै सक्तैन। म हर क्षण तिमीसँगै छु, तिम्रो हृदयमा। म हरक्षण तिमीलाई हेरिरहेको छु किनकि म नै हुँ तिम्रो जीवनको अभिभावक।**

# सन्धिवात (बाथ) को योग उपचार

वात रोगलाई जनमानसमा बाथ रोग भन्ने गरिन्छ। बाथ भन्नाले वेदना, दु:खाइ भन्ने बुझिन्छ । जाडो याममा वात रोग बढी देखिन्छ । वात रोगका पनि विविध प्रकार पाइन्छन् जसमा आमवात (Rheumatoid Arthiritis), वातरक्त (Gout), सन्धिवात (Arthritis) आदि पर्दछन् । यस अंकमा विशेषत: सन्धिवातको बारेमा चर्चा गरिनेछ ।

प्राय:जसो बूढाबूढीलाई लाग्ने, चिसो समयको आगमनका साथसाथै बढ्दै जाने जसमा मुख्य गरेर सन्धि अर्थात् जोर्नीमा विशेष वेदना हुन्छ, त्यसलाई सन्धिवात (Arthritis) भनिन्छ । प्राचीन आयुर्वेदीय संहिताहरूमा यो रोगको स्वतन्त्र उल्लेख नभए पनि आजकाल सन्धिवात शब्दबाट यसलाई व्यवहृत गरेको पाइन्छ ।

आर्थराइटिस सन्धि (Joint) को शोफ (Inflammation) हो जसमा वेदना (Pain), सुन्निने (Swelling) र सन्धिको चालमा मन्दता छाउँछ। यस रोगको कारणमा स्थानीयरूपमा सन्धिमा पीप जम्नु र सार्वदैहिक अर्थात् सम्पूर्ण शरीरमा फैलने आमवात (Rheumatoid Arthiritis) जस्ता रोग हुन् ।

**सन्धिवातको निदान** (Causes)

यसलाई शरीरको व्याधिक्षमत्वमा गडबड भएर उत्पन्न हुने रोगअन्तर्गत पनि राखिएको छ। शरीरमा

**प्राय:जसो बूढाबूढीलाई लाग्ने, चिसो समयको आगमनका साथसाथै बढ्दै जाने जसमा मुख्य गरेर सन्धि अर्थात् जोर्नीमा विशेष वेदना हुन्छ, त्यसलाई सन्धिवात** (Arthritis) **भनिन्छ ।**

सन्धिवातबाट प्रभावित हातहरू

प्रभावित औंलाका जोर्नीहरू

बाथ रोगमा फाइदा गर्ने विभिन्न सूक्ष्म व्यायामहरू

उत्पन्न आम (Indigested material) सन्धिहरूमा जम्मा भएर उत्पन्न हुने अवस्थालाई आमवात भनिन्छ । त्यस्तै कुपित आहार-विहारको कारण प्रदूषित रक्त र वातका कारण उत्पन्न हुने वातरक्त (Gout) मा पनि सन्धि प्रदेशमा पीडा हुने गर्दछ । ज्यादा शारीरिक परिश्रम गर्नाले वा बढ्दो बूढेसकालको कारण सन्धिमा अत्यधिक वेदना र शोथ हुन्छ ।

सन्धिवात वा आर्थराइटिसमा सन्धि प्रदेशमा ज्यादै पीडा हुने गर्दछ। सम्बन्धित खुट्टा वा हातलाई चालमा ल्याउँदा ज्यादै दुख्छ। यसलाई आयुर्वेदमा एक प्रकारको वातज व्याधिको रूपमा लिइएको छ । प्राय: गरेर बिरामीलाई हल्का मालिस गर्न, सूक्ष्म व्यायाम गर्न सल्लाह दिइन्छ । मालिशको रूपमा सरस्यूँको तेल, एरण्डको तेल, तोरीको तेल, सैन्धवादि तेल प्रयोग गरिन्छन् । यसबाट हुने वेदना नाशको लागि गुग्गुल, दशमूल, देवदारु आदि द्रव्यहरू प्रयोग गरिन्छन् र यौगिक प्रक्रियाबाट यस रोगलाई निम्न तरीकाबाट कम गर्न सकिन्छ–

यो रोग वातज व्याधि भएकोले पञ्चकर्मअन्तर्गतको वस्ती क्रियाबाट शरीर शोधन गरेपछि अन्य योग आसनहरूको अभ्यास गर्न सकिन्छ ।

१. विविध सूक्ष्म व्यायामहरूमा जस्तै: हातका औंलाहरू, गोडाका औंलाहरू, कुम, घुँडालगायत शरीरका अन्य जोर्नीहरूको अभ्यास गर्ने ।
२. आसनहरूमा शुरु-शुरुमा बस्न मिल्ने साधारण आसनहरू जस्तै: सुखासन, सिद्धासन, अर्धपद्मासनको अभ्यास गर्दै गएर पवनमुक्तासनअन्तर्गत पर्ने विविध आसनहरू, नौकासन आदिको अभ्यास गर्नुपर्दछ ।
३. प्राणायाममा नाडी शोधन, भ्रामरी, कपालभातिको अभ्यास गर्नुपर्दछ ।
४. षट्कर्ममध्ये नेती, कुञ्जल र लघु शंख प्रक्षालन गर्नुपर्दछ ।
५. योगनिद्रा र ध्यानबाट पनि यस रोगमा राहत मिल्दछ ।

योग आसनहरूको अभ्यासपछि माथि उल्लिखित विभिन्न वातनाशक तेलले मालिस गरेर घाम ताप्नाले ज्यादै फाइदा हुन्छ। सन्धिहरूलाई चलायमान गराउनको लागि प्रात: भ्रमणका साथै साना-साना कार्यहरूमा लागिरहने अभ्यास गर्नुपर्दछ ।

**आहार** : खाद्य पदार्थमा हल्का पथ्य आहार सेवन गर्ने, तिक्त, कटु, कषाय रसप्रधान द्रव्यका साथै ज्यादा मसलादार तथा कृत्रिम खाद्य पदार्थको सेवन नगर्ने ।

**विहार** : कम हावा लाग्ने, तातो, न्यानो सूर्यको प्रकाश स्पष्ट आउने ठाउँमा बस्नुपर्दछ । धेरै समय चिसोमा बस्नुहुँदैन । जाडो समयभरि मनतातो पानीले नुहाउने अभ्यास गर्नुपर्दछ ।

जय गुरुदेव !

# टिमुर

हाम्रो दैनिक जीवनमा प्रयोग गर्दै आइरहेका कतिपय मसला आदि खाद्य सामग्रीहरू आफैमा आयुर्वेदिक गुणले सम्पन्न भएको पाइन्छ । यसका बारेमा खासै जानकारी नभए पनि परम्परागत रूपमा जानी नजानी हामीले यी वनस्पतिहरूको प्रयोग गर्दै आइरहेका छौँ । चाहे जीरा होस् वा मरीच, ल्वाङ होस् वा सुकुमेल, हरेकका आ-आफ्नै गुणहरू छन् । यी मरमसलाहरूमध्ये टिमुर पनि एक हो । यसपटक आयुर्वेद चर्चा स्तम्भअन्तर्गत टिमुरको विषयमा चर्चा गर्न लागिएको छ ।

टिमुर २ देखि ६ मिटरसम्म अग्लो हुने झाडी प्रजातिको काँडादार वनस्पति हो । काण्डमा र पातको फेदमा थेप्चा काँडाहरू हुन्छन् । उक्त काँडाहरू २ से.मी. लामा, तीखा र काण्डमा छरिएका हुन्छन् । यसका पहेँला फूलहरू हाँगामा झुप्प फुलेका हुन्छन्, फल गोला, काँचो अवस्थामा हरियो रङ्गका, फल पाक्दा राता हुन्छन् र सुकिसकेपछि काला हुन्छन् । यसको फलभित्र एउटा अथवा दुईवटा काला टल्कने बीऊ हुन्छन् । यसका फल वा पात खाँदा तीतो, पीरो, पर्पराउने, धेरै खाएमा बाडुली आउने हुन्छ । यसको वैज्ञानिक नाम Zanthoxylum armatum DC हो । यसको फूल फुल्ने समय फाल्गुणदेखि चैत्र महिनासम्म हो । भाद्रदेखि कार्तिक महिनासम्म फल टिप्न सकिन्छ ।

प्यूठान, सल्यान जिल्लाहरू प्रसिद्ध मानिन्छन् । नेपालको प्रायः सम्पूर्ण पहाडी जिल्लाहरूमा पाइएता पनि पश्चिमी भेगको टिमुर औषधीय दृष्टिकोणले ज्यादा उत्तम मानिएको छ ।

टिमुरको गुण लघु, रुक्ष, तीक्ष्ण, रस कटु, तिक्त, विपाक कटु र वीर्य ऊष्ण हुन्छ ।

**रासायनिक संगठन :**

टिमुरमा हुने तेलमा लिमोनेन (Limonen), लिनालून (Linaloon) र मिथाइल साइनामेट (Methyal Cinnamate), जिरानियोल (Geraniol), सुवेनिन (Subinene), सिट्राल (Citral) आदि तत्त्व पाइन्छन् ।

**उपयोगिता :**

यो कफवातजन्य रोगमा उपयोगी छ । बाह्य प्रयोगको रूपमा यसको चूर्ण घाउ-खटिरामा छर्किन सकिन्छ । यसको मुख्य प्रयोग मुख, दाँत तथा घाँटीका रोगमा जस्तैः घाँटी बस्ने, घाँटी दुख्ने, दाँत दुख्ने, मुख गन्हाउने आदि रोगमा स्वरस, क्वाथ र चूर्णको रूपमा प्रयोग गरिन्छ । दन्त रोगमा दाँत माझ्न पनि प्रयोग गरिन्छ ।

**टिमुरका अन्य प्रयोगहरु :**

सामान्यरूपमा टिमुरलाई मसलाको रूपमा प्रयोग गरिन्छ । टिमुरलाई सिस्नु र च्याउका तरकारीहरूको विषाक्तता हटाउनको लागि प्रयोगमा ल्याइन्छ । रुघा लाग्दा, टाउको दुख्दा टिमुरको काढा सेवन गरिन्छ । जनावरहरूलाई विषको असर परेको अवस्थामा पनि प्रतिविषको रूपमा प्रयोग गरिन्छ । विषाक्त खाना (Food Poisoning) को प्रभाव कम गर्न, अरूचि हटाउन, जुका मार्न पनि प्रयोग गरिन्छ । विभिन्न प्रकारका दन्तमञ्जन, साबुन र दुर्गन्ध हटाउने औषधिहरूमा टिमुरको प्रयोग गरिन्छ ।

शिरशूलमा लेप गर्न सकिन्छ, पक्षाघात, आमवातमा प्रयोग हुन्छ । पाचन संस्थानमा अग्निमान्द्य, अतिसार र यकृत् प्लीहा वृद्धि, अर्श र कृमीरोगमा उपयोगी छ । मुटुको कमजोरीलाई नाश गर्दछ ।

यसका प्रयोज्याङ्ग बोक्रा र फल हुन् । यसको चूर्णको मात्रा १-२ ग्राम हो ।

बजारमा तेजोवत्याद्य घृत र तुम्बर्वादि चूर्ण नामले यसका योगहरू पाइन्छन् ।

**सामान्यरूपमा टिमुरलाई मसलाको रूपमा प्रयोग गरिन्छ। टिमुरलाई सिस्नु र च्याउका तरकारीहरूको विषाक्तता हटाउनको लागि प्रयोगमा ल्याइन्छ। रुघा लाग्दा, टाउको दुख्दा टिमुरको काढा सेवन गरिन्छ। जनावरहरूलाई विषको असर परेको अवस्थामा पनि प्रतिविषको रूपमा प्रयोग गरिन्छ।**

टिमुरको फल गोकर्णे औँसी वा बाबुको मुख हेर्ने दिनमा टिप्दा बढी औषधीय गुण हुन्छ भन्ने धार्मिक मान्यता पाइन्छ।

**अन्त्यमा :**

नेपालमा टिमुरको प्रयोग धेरै पहिलेदेखि नै भएको पाइन्छ। विगत केही वर्षको मूल्य सूची हेर्दा यसको मूल्य क्रमिकरूपमा बढ्दै गएको देखिन्छ। हाल टिमुरको मूल्य बजारमा प्रति के.जी. रू.८०-१००/- छ। यही बढ्दो मूल्यको कारण टिमुरको खेती तथा व्यापारमा पनि क्रमिकरूपले विकास भएको छ। नेपालमा वार्षिक सरदर ५००-७०० टन टिमुर संकलन भएर प्रशोधन तथा निर्यात गरिन्छ। औषधीय गुणहरूले भरिएको यस्तो महत्त्वपूर्ण जडिबुटीको संरक्षण गर्न आवश्यक देखिन्छ। यसलाई आधुनिक खेती प्रणालीअनुरूप खेती गरेर कृषकहरूको आर्थिक उन्नति गर्न र बजार मागलाई पूर्ति गर्न सकिन्छ। टिमुरको संरक्षणका लागि "Ex-situ conservation of Zanthoxylum armatum" मा वनस्पति शास्त्र केन्द्रीय विभाग, त्रिभुवन विश्वविद्यालयमा Tissue culture प्रविधिबाट बिरुवाको उत्पादन गर्ने प्रयास भइरहेको छ। यदि उक्त कार्य सफल भएको खण्डमा कृषकहरूलाई टिमुरका बिरुवा सजिलै उपलब्ध गराउन सकिनेछ र टिमुरको संरक्षणका लागि यो कार्य कोशेढुङ्गा साबित हुन सक्दछ।

जय गुरुदेव !

–सुरजराज अधिकारी
(त्रि.वि., कीर्तिपुर)

# परमपूज्य सदगुरुदेवको अवतरण यात्रा

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमश: प्रकाशित गर्दै आएका छौं । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

...यसैप्रकार योगी निर्मलदेवले उहाँप्रति आफ्नो विचार प्रकट गर्दै भनेका छन्–

परमहंस स्वामी निखिलेश्वरानन्दज्यूको व्यक्तित्व आफैमा अप्रतिम, अद्भुत र अनिर्वचनीय रहेको छ । उहाँमा हिमालयजस्तै उचाइ छ र सागरजस्तै गहिराइ पनि । साधनाप्रति उहाँ पूर्णत: समर्पित व्यक्तित्व त हुनुहुन्छ नै, साथै जीवनप्रति उन्मुक्त र सहृदयी पनि । वेद, कर्मकाण्ड र शास्त्रहरूबारे उहाँमा अगाध र विस्तृत ज्ञान छ, मन्त्र र तन्त्रको बारेमा पनि पूर्णत: जानकारी छ । उहाँ नै पहिलो यस्तो व्यक्तित्व हुनुहुन्छ जसमा सबै प्रकारका साधनाहरू समाहित छन् । उच्चकोटिका वैदिक र दैविक साधनाहरूमा जसरी उहाँ अग्रणी हुनुहुन्छ, त्यसैगरी औघड, मसान र साबर साधनामा पनि आफैमा अन्यतम हुनुहुन्छ । उच्चभन्दा उच्च विद्वान्‌ले पनि उहाँबाट मार्गदर्शन प्राप्त गर्न सक्दछ भने सामान्य गृहस्थ व्यक्ति पनि आफ्ना समस्याहरूको समाधान पाएर राहत अनुभव गर्दछ । प्रायजसो योगीहरू कुनै एउटा क्षेत्रमा मात्रै निष्णात् र सिद्ध हुन्छन् । संसारमा त्यस्ता व्यक्तित्व अत्यन्तै कम छन् जो यति धेरै विरोधाभास र विविध साधनाहरूको समन्वित स्वरूप बनेका हुन्छन् । स्वामी निखिलेश्वरानन्दज्यूको व्यक्तित्व यस्तै अनिन्द्य, अनिर्वचनीय र अप्रतिम छ ।

उनै दिव्य योगीराज आज हाम्रो सामु डा. नारायण दत्त श्रीमालीज्यूको रूपमा अत्यन्त सहजरूपमा आफैलाई लुकाएर रहनुभएको छ । उहाँ आज आफैलाई जलाएर दिनरात कार्यरत हुनुहुन्छ । त्रिजटा अघोरीले छ्छल्किएको नेत्रले उहाँप्रति हेर्दै भनेका छन्– उहाँ अरूका रोग, कठिनाइहरू आफूमा लिनुहुन्छ । यसबाट उहाँको शरीरमा प्रतिकूल असर पर्दछ र यो त उहाँको दमहो नत्र त यति धेरै प्रयोग र रोगहरूलाई आफूमा लिने हो भने सामान्य व्यक्ति त समाप्त नै हुन्छ ।

उहाँसँग संन्यासी शिष्य पनि रहन चाहन्छन् । एकपटक स्वामी योगात्रयानन्दज्यूलाई एक दिन उहाँसँग जोधपुर बस्ने अवसर प्राप्त भयो, स्वामी योगत्रयानन्दज्यू भन्नुहुन्छ–

एकदिन मैले विगलित कण्ठबाट उहाँसँग निवेदन गरेँ– म केवल एक दिनका लागि हजूरकहाँ आउन चाहन्छु र हजूरका संन्यासी शिष्यहरूबाट सुनेको आधारमा मेरो मनमा बनेका ती धारणाहरूबारे जान्न चाहन्छु, आश्वस्त हुन चाहन्छु । मेरो आश्चर्यको सीमा रहेन जब उहाँले आफूसँग एक दिन बस्नका लागि मलाई स्वीकृति दिनुभयो ।

म जब उहाँनजिक पुगेँ तब बिहानको करिब ४ बजेको थियो । शायद उहाँलाई मेरो आगमनको बारेमा पहिले नै जानकारी भइसकेको थियो । उहाँबाट के लुकेको थियो र ! उहाँले सेवकद्वारा ढोका खोल्न लगाएर मलाई माथि

नै बोलाउनु भयो । माथि छतमा उहाँ प्रात:कालीन सन्ध्या-वन्दना सम्पन्न गरिरहनु भएको थियो ।

शहरी वातावरण र जङ्गलको वातावरणमा धेरै फरक हुन्छ, तैपनि छतमा मलाई राम्रै महसुस भयो । मधुर र आनन्ददायक बतास चलिरहेको थियो । गुरुदेव पूर्वतर्फ मुख गरेर मृगचर्ममा बसी सन्ध्या-वन्दना सम्पन्न गर्दै हुनुहुन्थ्यो । जसै शौनकीय उपनिषद्मा बताइएको छ कि त्रिकाल सन्ध्या प्रात:काल नै सम्पन्न गर्नु श्रेष्ठ छ, उहाँ यसै उपनिषद्का अनुसार सन्ध्या सम्पन्न गरिरहनु भएको थियो । उहाँले त्रिकाल सन्ध्या सम्पन्न गर्नुभयो, सूर्यलाई साक्षात् जल प्रदान गर्नुभयो, अर्घ्य दिनुभयो र ब्रह्म गायत्री मन्त्रद्वारा आफैलाई शून्य आधारित गरेर मन्त्र जप एवं पुरश्चरण सम्पन्न गर्नुभयो ।

अझै पनि अँध्यारो हटिसकेको थिएन, आकाशमा ताराहरू चम्किरहेका थिए, पूर्व क्षितिजमा हल्का उज्यालो थियो । मैले गुरुदेवको अनुहारमा ध्यानपूर्वक हेरिरहेको थिएँ । उहाँ पक्कै केही दुब्लाउनु भएको थियो । जस्तो उहाँको संन्यासी जीवनमा शरीर थियो, त्यस्तो त देखिएको थिएन तर पनि उहाँको शरीर सौष्ठव आफैमा आकर्षक र प्रभावपूर्ण थियो, अनुहारमा एउटा अपूर्व लावण्य र तेज वर्षिरहेको थियो जसलाई सौभाग्यशालीले मात्र अनुभव गर्न सक्दछन् ।

ब्रह्म गायत्री मन्त्र समाप्त गरेर उहाँ केही क्षणका लागि एकस्थ हुनुभयो । मैले अनुभव गरेँ कि प्रात: ५ बजेदेखि ६ बजेको बीचमा उहाँ सम्पूर्ण शिष्यहरूसँग सम्बन्धित हुनुहुन्छ । त्यसबेला उहाँले आफैलाई पूरै ब्रह्माण्डमा फैलाउनुहुन्थ्यो । उहाँको शरीर त मृगचर्ममा बसिरहेको देखिन्छ तर उहाँको प्राण र सूक्ष्म शरीर पूरै संसारमा व्याप्त हुन जान्छ । यतिबेला कतै कुनै शिष्यले पवित्र भएर पूज्य गुरुदेवको तस्वीरअगाडि आफ्ना जे जति कुरा राख्दछ, त्यसलाई पूज्य गुरुदेवले सुन्नुहुन्थ्यो र सम्भव भएसम्म त्यस समस्याको समाधान पनि गर्नुहुन्थ्यो ।

मैले जानीजानी एक-दुई पटक आवाज दिएँ तर उहाँ निश्चल हुनुहुन्थ्यो । यसको तात्पर्य मेरो सामु उहाँको शरीर मात्र थियो, प्राणश्चेतना त पूरै ब्रह्माण्डमा व्याप्त थियो ।

करिब ६ बजे उहाँको शरीरमा स्पन्दन भयो र आफ्नो कमलवत् आँखा खोल्नुभयो । उहाँको अनुहारमा अद्भुत करुणा व्याप्त थियो, मलाई देख्नासाथ उहाँमा प्रसन्नताको आवेग आयो । मैले उहाँको चरणमा साष्टाङ्ग दण्डवत् गरेँ । उहाँले मेरो पीठमा हात राखेर 'सिद्धिप्रद होऊ' यस्तो आशीर्वाद दिनुभयो । मैले कैयौँ वर्षपछि उहाँका औँलाहरूको स्पर्शको अनुभव गरिरहेको थिएँ, आफैमा पुलकित एवं रोमाञ्चित महसुस गरिरहेको थिएँ ।

यसपछि उहाँले प्रात:काल केही विशेष पत्रको जवाफ लेखाउन प्रारम्भ गर्नुभयो । हुन त दैनिक धेरै पत्र मन्त्र-तन्त्र-यन्त्र पत्रिकाको कार्यालयमा आउँछन्, तर तीमध्ये केही छानिएका पत्रहरूको जवाफ मात्र उहाँले लेखाइरहनु भएको थियो । करिब नौ–साढे नौ बजे उहाँ यस कार्यबाट निवृत्त हुनुभयो र घरमा नै बनेको आफ्नो अफिसमा बस्नुभयो । अहिलेसम्म मैले देखेँ कि पूरै भारतवर्षका आगन्तुक पुरुष र महिलाहरू उहाँसँग भेट्नका लागि आतुर थिए । उनीहरू सबै आ-आफ्ना समस्या लिएर आएका थिए, गुरुदेवले प्रत्येकलाई पालैपालो बोलाउनुहुन्थ्यो । जब उनीहरू अफिसभित्र भेटका लागि जान्थे तब उनीहरूको अनुहारमा तनाव हुन्थ्यो तर अफिसबाट बाहिर निस्कने बेलामा उनीहरूको अनुहारमा सन्तुष्टि र पूर्णताको भाव हुन्थ्यो । यस्तो लाग्दथ्यो आफ्ना सारा कुरा गुरुदेवलाई बताएर स्वयं निश्चिन्त हुन गएका छन् तिनीहरू । करिब १२ बजेसम्म यही क्रम चलिरह्‌यो ।

यसपछि धेरै पत्र आए जसलाई उहाँले सर्सती हेर्नुभयो । तब फेरि अतिथि कक्षमा केही अन्य व्यक्तित्व आए जसमध्ये कोही सेक्रेटरी थिए, कोही अभिनेता । यी सबैसँग पनि गुरुदेवले भेट्नुभयो । यिनीहरूका गोपनीय र महत्त्वपूर्ण समस्याहरूको समाधान गर्नुभयो । करिब १ बजे उहाँले आफ्नो परिवारसँग बसेर भोजन स्वीकार गर्नुभयो, यसपछि मलाई लिएर उहाँ साधना कक्षमा पस्नुभयो । क्रमश:

**जब उनीहरु अफिसभित्र भेटका लागि जान्थे तब उनीहरुको अनुहारमा तनाव हुन्थ्यो तर अफिसबाट बाहिर निस्कने बेलामा उनीहरुको अनुहारमा सन्तुष्टि र पूर्णताको भाव हुन्थ्यो ।**

हामी नेपालीहरूमा जुनसुकै क्षेत्रमा पनि काम गरेर देखाउन सक्ने अवस्था छ र सफल पनि हुन सकिन्छ । नयाँ तकनिकी र नयाँ क्षेत्रहरूमा हामी जानैपर्छ । मुख्यतः हामीमा प्रतिबद्धता, लगनशीलता, आँट र साहस चाहिन्छ ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

# सावर संरचनाबाट प्राप्त
# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरश: पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमश: प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## धैर्य

मन्त्र साधनामा अगाडि बढ्ने व्यक्तिहरूमा चाहिने आवश्यक गुणहरूमध्ये धैर्य पनि एक हो । धैर्य साधनामा अगाडि बढ्नेहरूको प्रमुख कडी हो । जो व्यक्तिले धैर्य गर्न सक्तैन उसले साधनामा सफलता प्राप्त गर्न पनि सक्तैन । हुन त धैर्य साधना गर्नेका लागि मात्र होइन दैनिक जीवन-यापनका हरेक क्रियाकलापमा आवश्यक हुन्छ । यस संसारमा भन्ने बित्तिकै केही सम्भव हुँदैन । प्रत्येक ठाउँमा, प्रत्येक क्षेत्रमा धैर्य अत्यन्त आवश्यक हुन्छ । धैर्य गरेर नै फल प्राप्त हुने गर्दछ ।

हामीले चाहेर, भन्ने बित्तिकै त एक कप चिया पनि खान सक्तैनौँ । चिया खाने हो भने करिब पाँच मिनेट धैर्य गर्नुपर्ने हुन्छ । यस्तै खाना खाने हो भने करिब १ घण्टा पर्खनै पर्ने हुन्छ, धैर्य गर्नुपर्ने हुन्छ । एक ठाउँबाट अर्को ठाउँमा जानुपर्‍यो भने कि त हिँड्नु पर्‍यो, कि त गाडीमा जानुपर्ने हुन्छ । गाडीमा पनि धैर्य गरेर बस्नुपर्ने हुन्छ । प्लेनमा नै उडेर गए पनि नपुगेसम्म त धैर्य गरेर नै बस्नुपर्ने हुन्छ । यसरी जे कुरामा पनि धैर्य गर्नुपर्दछ भन्ने कुरालाई बुझाउन खोजिएको हो ।

त्यसैले जे चीजको प्राप्तिमा पनि धैर्यको आवश्यकता हुन्छ भने मन्त्र साधनामा अगाडि बढ्नेहरूका लागि त झनै धैर्यको आवश्यकता हुन्छ । मन्त्र साधनामा अगाडि बढ्नेहरूमा घण्टौँसम्म साधना गरेर बस्न सक्ने खालको धैर्य चाहिन्छ । बस्ने बित्तिकै मन आत्तिएर कति बेला उठिहालौँ भनेर हतारिनेले साधनाको वास्तविक रसास्वादन गर्न सक्तैनन् । आँखा बन्द गरेर भित्रभित्रै डुब्ने बानीको विकास गर्नुपर्दछ ।

एक त साधना गर्न बस्दा पनि धैर्य गरेर बस्न सक्नुपर्दछ । अर्को, साधना गर्ने बित्तिकै आजको अहिल्यै कुनै प्राप्ति पनि नहुन सक्छ । साधना गर्ने बित्तिकै प्राप्ति भएन, लौ खै केही भएन भनेर हामी आत्तिन पनि सक्छौँ । साधना गर्ने भइसकेपछि यस्ता चीजहरू बुझ्नुपर्ने हुन्छ । साधना गर्दै अगाडि बढेपछि प्राप्ति नहुने भन्ने प्रश्नै उठ्दैन । त्यसैले धैर्य गरेर अगाडि बढेपछि ढिलो-चाँडो अवश्य फल प्राप्त भइहाल्छ । तैपनि यी कुराहरूलाई नबुझेर हामी बढी महत्वाकांक्षी बन्न सक्छौँ । छिटो प्राप्तिको आशामा तत्काल नै उपलब्धि लिइहाल्ने मानसिकता पनि बनाइरहेका हुनसक्छौँ । यस मानसिकतालाई परिवर्तन गर्नुपर्छ । भगवान् श्रीकृष्णले गीतामा 'कर्म गर तर फलको आशा नगर' भन्नुभए झैँ तपाईं हामीले पनि कर्म गर्ने हो । अरू त हाम्रो हातमा केही हुँदैन । हाम्रो काम त केवल साधना हो, फल दिने अधिकार त केवल परमपूज्य सद्‌गुरुदेवहरूमा निहित हुन्छ । यसैले आफ्नो वशमा नै नभएको कुरा आजै हुनुपर्‍यो, भोलि नै हुनुपर्‍यो भनेर तपाईं हामी आत्तिएर के गर्ने ?

प्रत्येक मनुष्यको आ-आफ्नै भागभोग हुने गर्दछ । हामीले विगतमा गरेका क्रियाकर्म हाम्रो भाग्य बनेर वर्तमानमा आइपुगेको हुन्छ । त्यसैले पनि विगतका समयमा हामीबाट कस्ता-कस्ता कर्म भए, कति राम्रा-राम्रा कर्म भए होलान्, कति नराम्रा कर्म । यस जीवनको त तपाईं हामीले आफ्नो पाराले मूल्याङ्कन गरौँला, तर विगतको जीवनमा हामीले कस्ता-कस्ता कर्म गर्‍यौँ होला त्यो हामीलाई थाहा छैन । विगतमा धेरै नराम्रा कर्म गरेका रहेछौँ भने यस जीवनमा साधनाको माध्यमले सपार्दा सपार्दै पनि केही समय लाग्न सक्छ । पूर्वजन्मका दोषहरू, भोगहरू कटाउँदा कटाउँदै पनि केही समय बित्न सक्छ । यस्ता गूढ रहस्यका सत्य र यथार्थ कुरा हाम्रो मस्तिष्कले बुझ्न नसक्दा हामी आत्तिन्छौँ, हतारिन्छौँ र भावनालाई बिगार्छौं । विचलित भई प्राप्त हुन लागेको विषयलाई त्यागेर मृगतृष्णा बोकेर भौँतारिन थाल्दछौँ र झनै प्राप्तिदेखि टाढा भाग्न थाल्दछौँ ।

यसैले साधनात्मक प्रक्रिया भनेका सतत् प्रक्रिया हो । निरन्तररूपबाट लागेपछि प्राप्ति हुने कुरा हो, अटुट श्रद्धा, भक्ति, विश्वास र समर्पणलाई कायम राख्दै धैर्यवान् हुनेले नै छिटो प्राप्ति गर्ने हो । त्यसैले धैर्यलाई पालना गरौँ, साधनामा सफलता हासिल गरौँ । जय गुरुदेव !

# गुरु गीता

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**वन्दे गुरुणां चरणारविन्दं**
**संदर्शित स्वात्म सुखांबुधीनाम् ।**
**जनस्य येषां गुलिकायमानं**
**संसार हालाहल मोहशान्त्यै ॥१३५॥**

भावार्थ : शिष्यभित्रको आनन्द सागरसँग परिचित गराउने, प्राणीहरूमा सांसारिक विषको मोहलाई शान्त गर्ने औषधिसमान श्रीगुरुको निर्मल चरणकमलमा भक्तिपूर्वक नमस्कार छ । संसारका प्राणीहरू यस कुराबाट अनभिज्ञ छन् कि जुन सुख र आनन्दको प्राप्तिका लागि उनीहरू अनेकौँ प्रयास गर्दछन्, बाहरी वस्तुहरूमा नै तिनलाई खोज्दछन्, त्यो आनन्द त स्वयं उनीहरूभित्र नै स्थापित छ ।

**करुणा खड्गपातेन**
**छित्त्वा पाशाष्टकं शिशोः ।**
**सम्यग् आनन्दजनकः**
**सद्गुरुः सोऽभि धीयते ॥१३६॥**

भावार्थ : करुणारूपी तरवारले शिष्यका अन्तःस्थित अष्टपाशलाई (घृणा, लाज, डर, शङ्का, निन्दा, कुल, शील तथा जातिको बन्धनलाई 'अष्टपाश' भनिन्छ) नष्ट गरी उसलाई आनन्द-सागरमा निमग्न गरिदिनेलाई नै सद्गुरु मानिएको छ । अष्टपाश नै जीवका बन्धन हुन्, जसको कारण ऊ यस संसारप्रति आसक्त भएर परमानन्दतर्फ उन्मुख हुन पाउँदैन । यी अष्टपाशहरूबाट शिष्यलाई जसले मुक्ति प्रदान गर्न सक्छ उहाँ नै सद्गुरु कहलाउनुहुन्छ ।

**गुरोः ज्ञानं च संप्राप्य**
**गुरुनिन्दां करोति यः ।**
**अनन्त दुःख माप्नोति**
**यावच् चन्द्रदिवाकरौ ॥१३७॥**

भावार्थ : जुन शिष्यले गुरुबाट दीक्षा एवं ज्ञान प्राप्त गरेर गुरुको निन्दा गर्दछ, उसले ब्रह्माण्डमा सूर्यचन्द्र रहेसम्म अर्थात् अनन्त कालसम्म दुःख भोग्दछ । जसरी आकाशमा थुक्ने व्यक्ति अत्यन्तै अज्ञानी हुन्छ किनकि उसले थुकेको थुक उसैमाथि पर्छ, त्यसरी नै गुरुको निन्दा गर्ने व्यक्ति यो निन्दाजन्य कुकृत्यबाट स्वयं दुःख प्राप्त गर्दछ किनकि गुरु त शुद्ध, बुद्ध एवं मुक्त स्वभावयुक्त हुनुहुन्छ ।

**हुंकारेण न वक्तव्यं**
**प्राज्ञैः शिष्यैः कदाचन ।**
**गुरोरग्रे न वक्तव्यम्**
**असत्यं तु कदाचन ॥१३८॥**

भावार्थ : बुद्धिमान शिष्यले कहिले पनि गुरुका अगाडि हुंकारयुक्त वाणी अर्थात् ठूलो आवाजमा कठोर वा असभ्य शब्दले कुरा गर्नु हुँदैन तथा असत्य कुरा पनि बोल्नु हुँदैन किनकि गुरु स्वयं अन्तर्द्रष्टा हुनुहुन्छ, उहाँ शिष्यको हृदय वा मनका एक-एक विचार, एक-एक भावनालाई पढ्न सक्षम हुनुहुन्छ । उहाँलाई पल-पलको खबर थाहा हुन्छ, तसर्थ उहाँको अगाडि झूटो बोल्नु व्यर्थ हुन्छ ।

**गुरुकार्यं न लङ्घयेत्**
**नापृष्ट्वा कार्यमाचरेत् ।**
**न ह्युत्तिष्ठेद्दिशेऽनत्वा**
**गुरुसद्भाव शोभितः ॥१३९॥**

भावार्थ : गुरु-आज्ञाको उल्लंघन कहिले पनि गर्नु हुँदैन र उहाँको आज्ञाबिना कुनै कार्य पनि गर्नु हुँदैन । गुरुको भावनासँग आबद्ध शिष्यले जता गुरु विद्यमान हुनुहुन्छ त्यस दिशातर्फ नमस्कार नगरिकन कहिले पनि नसुतोस् एवं ओछ्यान नछाडोस् । 'आज्ञा गुरुणां परिपालनीया' गुरु तथा राजाको आज्ञा सदैव अनुल्लङ्घनीय हुन्छन् । तसर्थ, गुरुले जे सुकै कार्यका लागि आज्ञा दिनुभए पनि प्रमाद वा धृष्टतावश नगर्नु शिष्यको तुच्छता हो ।

**गुरौ सति स्वयं देवि !**
**परेषां तु कदाचन ।**
**उपदेशं न वै कुर्यात्**
**तथा चेद्राक्षसो भवेत् ॥१४०॥**

भावार्थ : गुरु हुँदै शिष्यले कहिले पनि, कसैलाई पनि उपदेश दिनु हुँदैन । यदि गुरु समान शिष्य पनि उपदेश दिने कार्यमा लागेमा उसलाई राक्षस समान मानिनेछ । गुरुको ज्ञान त महासागर समान छ र शिष्यको ज्ञान महासागरबाट लिएका केही थोपासमान हुन्छ । शिष्य यो थोरै ज्ञानले आफूलाई महान् ठान्न थाल्छ र उपदेश एवं प्रवचन दिन प्रारम्भ गर्दछ । यसो गर्नाले गुरुको ज्ञानको अपमान हुन्छ तथा शिष्य कृतघ्न मानिन्छ ।

# श्री निखिलेश्वर शतकम्

॥१०७॥

**एका प्रभो ! मम गतिस्तव पादरेणुः,**
**एका मतिस्मरणमेव पदाब्जयोस्तं !**
**एकं बलं शरणमस्ति तदेव सर्वं;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

जड बुद्धि भएकाहरूलाई समेत चैतन्य बनाउने गुरु-चरणको महिमा अवर्णनीय छ जसको पाउको स्पर्शले पावन धूलो समेत श्रद्धावान् शिष्यहरूका लागि चन्दन समान शिरोधार्य हुन्छ, जसको लेप लाएर शिष्यहरूको तप्तजीवन अपूर्व शान्तियुक्त शीतलता, प्रसन्नता एवं समृद्धिले परिपूर्ण हुन जान्छ । तसर्थ, हे प्रभु ! हजूरको चरणकमलको धूलो नै मेरो एक मात्र गति हो; हजूरको पाउको स्मृति नै मेरो एक मात्र मति (बुद्धि) हो; हजूरको शरणागति नै मेरो एक मात्र बल हो र त्यो नै मेरो जीवनको सर्वस्व हो । तसर्थ, हे गुरुवर ! म के भनुँ ? मेरा हृदयानुभूतिलाई वर्णन गर्न सक्ने क्षमता न त मेरो कण्ठमा नै छ, न कलममा नै छ । त्यसैले त म बारम्बार यति मात्र भन्न सक्छु कि म आफ्ना परम आराध्य हजूरको चरणकमलको वन्दना गर्दछु ।

॥१०८॥

**त्वत्पादपद्ममकरन्दमिलिन्दभावं,**
**प्राप्नोतु मे हृदयमद्य गुरोः प्रभावात् ।**
**स्यात् सद्गतिश्च सुतरामिह जन्म एव**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

कमलको परागको रसको लोभी भमराको प्रीत जगप्रसिद्ध छ । यदि सूर्यास्तको बेला, कमलले पत्र बन्द गर्ने समयमा भमरा कमलभित्र नै रह्यो भने उसले बाहिर निस्कने प्रयास गर्दैन, रातभरि त्यहीं बसेर पुनः कमल फक्रने प्रतीक्षामा रहन्छ । ऊ कमलका कोषमा पुगेर त्यसलाई छाड्न चाहँदैन । हे प्रभु ! यद्यपि मभित्र पात्रता त छैन तापनि हजूरको कृपाले सबै थोक सम्भव छ, यही सोचेर हजूरसँग वरदान माग्दछु कि हजूरको प्रभावले, हजूरको चरणकमलरूपी परागमधुपानको लोभी मेरो हृदयमा हजूरको चरणकमलमा मिलिन्दभावमयी (कमलको रसपानमा भमराको रतिजस्तो भावना) अदम्यरति प्राप्त होस् र यसै जन्ममा मेरो पूर्ण सद्गति होस् । हे गुरुवर ! हे निखिलेश्वर !! यही भावनाका साथ म हजूरको चरणविन्दयुग्मको बारम्बार वन्दना गर्दछु ।

॥१०९॥

**त्वद्भावभावितमनो विलयं प्रयातु,**
**त्वत्पादपद्मगलितामृतसिन्धुसीधौ ।**
**सारूप्यमस्तु मम नाथ ! भवत्स्वरूपे;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

हे गुरुवर ! हे निखिलेश्वर !! म निरन्तर हजूरको चरणारविन्दको बारम्बार वन्दनापूर्वक यही याचना गर्दछु– हजूरको चरमस्वरूपमा भावित मेरो मनले हजूरको चरणकमलबाट बगेको अमृतसिन्धुको महमा विलय प्राप्त गरोस् । हे नाथ ! हजूरको स्वरूपमा म एकाकार हुन पाऊँ जसबाट यो जन्म चरितार्थ होस् । ॐ शान्तिः ! शान्तिः !! शान्तिः !!! जय गुरुदेव ! समाप्त । ❑

**आत्मीय पाठकवर्ग, यस अङ्कदेखि यो स्तम्भ यहीं समाप्त भएको छ । परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य स्वरूपको बारेमा जान्नु र बुझ्नु हामी मनुष्यको वशको कुरा होइन । तैपनि यस स्तम्भमार्फत केही मात्रामा श्री निखिलेश्वर शतकम्लाई क्रमशः प्रकाशित गर्दै लाने प्रयास गरिएको थियो । यसबाट पाठकवर्ग अवश्यै लाभान्वित हुनुभयो भन्ने कुरामा हामी विश्वस्त छौं ।**

## मासिक हवन कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको पहिलो हप्ता सञ्चालन गर्दै आइरहेको मासिक हवन कार्यक्रम गत पौष महिनामा पनि सफलतापूर्वक सम्पन्न गऱ्यो । यस क्रममा पौष १ गते मङ्गलबार ललितपुर लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम, पौष २ गते बुधबार ललितपुर लगनखेलस्थित महालक्ष्मी मन्दिरमा तान्त्रोक्त महालक्ष्मी हवन, पौष ३ गते बिहीबार पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन र पौष ७ गते सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन कार्यक्रम सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:००-८:०० बजेसम्म तथा बाँकी हवन कार्यक्रमहरू बिहान ८:००-९:०० बजेसम्म सञ्चालन भएका थिए । हेर्दा सामान्य लाग्ने यी हवन कार्यक्रमहरूमा सहभागी हुँदा मात्र पनि अकल्पनीयरूपमा सद्‌गुरुदेवहरू तथा सम्बन्धित देवी देवताहरूको कृपा, आशीर्वाद प्राप्त गर्न सकिने भएकाले यी कार्यक्रमहरूमा सहभागी हुने साधक-साधिका, भक्तजनको संख्या दिनानुदिन बढ्दो छ ।

त्यस्तै मासिक हवन कार्यक्रमकै क्रममा सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय पोखराको आयोजनामा गत पौष २ गते बुधबार माता विन्ध्यवासिनीको मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन तथा सम्पर्क कार्यालय तनहुँको आयोजनामा गत पौष ३ गते व्यास गुफा प्रांगणमा तान्त्रोक्त महर्षि वेद व्यास हवन कार्यक्रम सम्पन्न भयो ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज अवतरण हुनुभएको अङ्ग्रेजी तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत पौष ६ गते (तदनुसार २१ डिसेम्बर २००८) स्थानीय गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्राङ्गणमा उक्त कार्यक्रम सम्पन्न गऱ्यो । प्रार्थना र गोरक्ष निखिल स्तवनको सामूहिक पाठबाट बिहान १०:१५ बजेदेखि शुभारम्भ भएको उक्त कार्यक्रम दुई चरणमा विभाजित थियो जसअन्तर्गत पहिलो चरणमा गुरु पूजन, मन्त्र जप/ध्यान, हवन, आरती आदि क्रमहरू सम्पन्न भएका थिए जसमा सद्‌गुरुदेवहरूको दिव्य चरण पादुको पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा बहन गर्ने साधक साधिकाहरू अशोक श्रेष्ठ, अञ्जना श्रेष्ठ, रिता खत्री र किशोर श्रेष्ठले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरणको शुभारम्भ सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट गुरुसेवा दल नं. १८ का सदस्य साधक भुवनराज पाण्डेयको स्वागत मन्तव्यबाट थियो । दोस्रो चरणमा भजन-कीर्तन, नृत्य, पुरस्कार वितरण, प्रवचन आदि रहेका थिए । प्रवचनको क्रममा सावर पन्थी नं. २ का सदस्यज्यूले धर्म र अध्यात्मसम्बन्धी विषयमा बोल्नुभएको थियो । पुरस्कार वितरणको क्रममा गोरक्ष निखिल वाणीको ५० जना वार्षिक सदस्य बनाएर डा. भोजराज जोशी, इन्द्रनाथ भट्ट, अजितकुमार सापकोटा र भाष्करानन्द राजोपाध्याय तथा २० जना वार्षिक सदस्य बनाएर निर्मला आचार्य, मधुबहादुर कार्की, बुद्धकुमार श्रेष्ठ र आशा थापाले पुरस्कारस्वरूप गुरु तस्वीर तथा विशेष धारण माला प्राप्त गर्नुभएको थियो । पुरस्कार वितरणको क्रममा हालसालै वैवाहिक बन्धनमा बाँधिनुभएका अशोक श्रेष्ठ तथा अञ्जना श्रेष्ठलाई सा.प.२ तथा सा.मा.ज्यूले उपहारस्वरूप परमपूज्य सद्‌गुरुदेवको तस्वीर प्रदान गर्नुहुँदै शुभकामनासहित माला पनि लगाइदिनुभएको थियो । त्यस्तै गोरक्ष निखिल भजन संग्रह पाँचौं भजन क्यासेट/सिडी 'समर्पण'लाई सावर पन्थी नं. का २ सदस्य एवं सावर मातृकाज्यूले गुरु चरणमा अर्पण गर्दै लोकार्पण गर्नुभएको थियो । उक्त क्यासेट/सिडी सिद्धाश्रम शक्ति केन्द्र, ललितपुर सम्पर्क कार्यालयको पहिलो प्रस्तुति हो ।

## विभिन्न जिल्लामा कार्यकर्ता प्रशिक्षण कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका सिन्धुली, सर्लाही, स्याङ्जा तथा पाल्पा जिल्लामा रहेका सम्पर्क कार्यालयहरुमा कार्यरत स्वयंसेवी कार्यकर्ताहरुका लागि विशेष प्रशिक्षण कार्यक्रम सम्पन्न भयो । गुरु सेवा दल नं. ५ का सदस्यज्यूको नेतृत्वमा ती जिल्लाहरुमा प्रशिक्षण सम्पन्न भएको थियो । गत पौष २२ गते सिन्धुली र सर्लाहीमा, २४ गते स्याङ्जामा र २८ गते पाल्पामा सञ्चालन भएको प्रशिक्षणको दौरानमा केन्द्रबाट जानुभएका प्रशिक्षकहरुले सम्पर्क कार्यालयमा रहेर कसरी उत्कृष्टरूपमा गुरुकार्य गर्न सकिन्छ भन्ने विषयमा प्रकाश पार्नुभएको थियो भने व्यावहारिक ढंगको प्रशिक्षण पनि अन्य केही जिल्लाहरुमा सम्पन्न भएको थियो । प्रशिक्षणबाट प्राप्त ज्ञान व्यवहारमा लगाउन प्रयास गर्ने कार्यकर्ताहरुले बताउनुभएको थियो ।

## कार्यकर्ता प्रशिक्षण सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्रले गत मङ्सिर २८ गते केन्द्रीय कार्यालय तथा काठमाडौँ उपत्यकामा रहेका आफ्ना सांगठनिक इकाइहरू सम्पर्क कार्यालय (भक्तपुर र ललितपुर), प्रस्तावित सम्पर्क कार्यालय, आरती केन्द्र एवं प्रचारप्रसार कक्षहरूमा विभिन्न तह र तप्कामा रहेर गुरुकार्य गर्ने तालिम प्राप्त कार्यकर्ताहरूका लागि विशेष प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो ।

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्राङ्गणमा सम्पन्न उक्त कार्यक्रम बिहान ११:०० बजे प्रार्थना, स्तुति वन्दनाबाट शुरु भएको थियो । केन्द्रीय विभागका संयोजकज्यूहरूबाट विभिन्न विषयमा प्रशिक्षार्थीहरूलाई प्रशिक्षण प्रदान गर्दै अपराह्न ३:०० बजेसम्म उक्त कार्यक्रम चलेको थियो । सर्वप्रथम सावर मातृका तथा प्रशासन तथा जनसम्पर्क विभागकी संयोजकज्यूले विभिन्न प्रशासनिक नीति-नियमका बारेमा स्पष्ट पार्दै सद्‌गुरुदेवहरूबाट प्राप्त नयाँ नीति-नियमहरू सुनाउनुभएको थियो । त्यस्तै सावर पन्थी नं. ३ सदस्य तथा प्रचारप्रसार तथा संगठन विभागका संयोजकज्यूले संगठन विस्तार र अन्य विविध विषयमा कार्यकर्ताहरूलाई सुसूचित गराउँदै बढीभन्दा बढी समय गुरुकार्यमा व्यतीत गर्न अनुरोध गर्नुभएको थियो । त्यसैगरी सावर पन्थी नं. २ सदस्य तथा साधना तथा शिविर विभागका संयोजकज्यूले उक्त अवसरमा प्रशिक्षण प्रदान गर्नुहुँदै कार्यकर्ताहरूका विविध जिज्ञासाहरूलाई समेत समाधान गर्नुभएको थियो । अन्त्यमा सावर पन्थी नं. १ सदस्य तथा आध्यात्मिक तथा दैवी शक्ति विभागका संयोजकज्यूले ध्यानको बारेमा गूढ रहस्यको जानकारी गराउनुहुँदै मनको शुद्धिकरण गर्ने विभिन्न उपायहरू बताउनु भएको थियो । उहाँले उक्त अवसरमा प्रयोगात्मकरूपमा विशेष मन्त्र ध्यान साधनाको अभ्यास पनि गराउनुभएको थियो ।

गुरुसेवा दल नं. ५ सदस्य साधक प्रेम लामाले उद्‌घोषण गर्नुभएको उक्त कार्यक्रमको बीच-बीचमा भजन-कीर्तन र नृत्य पनि प्रस्तुत भएका थिए ।

## आ.स.ने. तहको तालिम सम्पन्न

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिना विभिन्न तह र तप्कामा रहेर गुरुकार्यमा लागेका आफ्ना कार्यकर्ताहरूलाई तहगतरूपमा तालिम तथा प्रशिक्षण प्रदान गर्दै आइरहेको छ । यसै शृंखलाअन्तर्गत गत पौष महिनाको २० र २१ गते आध्यात्मिक सह-नेतृत्वकर्ताहरूका लागि १३ औँ तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । काठमाडौँको जैन भवन, कमलपोखरीमा सम्पन्न भएको उक्त तालिममा सहभागी हुन काठमाडौँ, ललितपुर, भक्तपुर, गोरखा, कास्की, चितवन, सुर्खेत, सर्लाही, सप्तरी लगायतका जिल्लाहरूबाट गरी ५९ जना कार्यकर्ताहरू आउनुभएको थियो । द्विदिवसीयरूपमा सञ्चालित उक्त कार्यक्रम दुवै दिन बिहान १०:०० बजे प्रार्थनाबाट शुरु भई सद्‌गुरुदेवहरूको स्तुति वन्दना, गुरु पूजन सम्पन्न भएपश्चात् विभिन्न विषयमा प्रशिक्षण सम्पन्न भई बेलुकी ५:०० बजेको गुरु आरतीपश्चात् सम्पन्न भएको थियो । बीचबीचमा भजन, नृत्य आदि क्रमहरू पनि समावेश भएका थिए । प्रशिक्षणको क्रममा आध्यात्मिक चेतना, भगवान् बुद्ध, बौद्धमार्गी, गुरुदेव, हिन्दु धर्म, सांगठनिक स्वरूप, साधना, तान्त्रिक संगठन, सि.श.के.को उद्देश्य लक्ष्य, ध्यान चेतना आदि विषयहरू समावेश थियो भने प्रयोगात्मकरूपमा विशेष ध्यानको अभ्यास पनि सम्पन्न भएको थियो ।

गुरु पूजनको क्रममा पहिलो दिन असीमकुमार शर्मा, लीलादेवी सिम्खडा, शारदा पुडासैनी र दोस्रो दिन हरिचन्द्र त्रिपाठी, उत्तम पाठक र जमुना तिवारीले गुरु पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो । कार्यक्रमको अन्त्यतिर सुनाइएको आत्मिक ग्रेडिङअनुसार कार्यकर्ताहरू पद्‌मा गुरुङ्ग, रञ्जनराज पोखरेल, विदुर श्रेष्ठ र महालक्ष्मी पराजुली आध्यात्मिक सह-नेतृत्वकर्ताबाट विकसित भई आध्यात्मिक नेतृत्वकर्ता तहमा प्रवेश गर्नुभएको थियो । कार्यक्रममा उद्‌घोषण सावर पन्थी नं. ३ का सदस्यज्यूले गर्नुभएको थियो ।

## नयाँबजारमा भजन-कीर्तन

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कक्ष नयाँबजारको आयोजनामा ललितपुर सम्पर्क कार्यालयले गत पौष १५ गते स्थानीय खुशीबुँको फुटबल मैदानमा भजन-कीर्तन कार्यक्रम सम्पन्न गऱ्यो । कार्यक्रममा विविध भजन तथा नृत्यहरू प्रस्तुत भएका थिए साथमा सद्‌गुरुदेवहरू र संस्थाका कार्यक्रमहरूका बारेमा उपस्थित भक्तजनहरूलाई जानकारी प्रदान गरिएको थियो ।

## काभ्रेमा पनि भजन

काभ्रे जिल्लाको पनौती नजिकै रहेको शंखु गा.वि.स.को इँटेमा रहेको प्रचार प्रसार कक्षद्वारा आयोजित भजनकिर्तन कार्यक्रम गत पौष १२ गते शनिबारका दिन सम्पन्न भयो । विभिन्न स्थानीय भजन मण्डलीको पनि सहभागिता रहेको उक्त भजनकीर्तन कार्यक्रममा उल्लेखनीय संख्यामा स्थानीय भक्तजन एवं शुभेच्छुकहरूको सहभागिता रहेको थियो ।

## जाँदा जाँदै

हाम्रा प्राचीन ऋषिमुनिहरुद्वारा प्रमाणित एवं प्रतिपादित विभिन्न विधाहरु जो मानव जीवनलाई उच्चतम अवस्थामा पु-याउन सबल र सक्षम रहेका छन्, जसले जीवनलाई मोक्षतर्फ अघि बढ्नका लागि मार्गदर्शन प्रदान गर्दछन्, साधन प्रदान गर्दछन्, विधि विधानहरु प्रदान गर्दछन्, त्यस्ता पूर्वजका धरोहरहरुलाई अहिले हामीले चटक्कै बिर्सिरहेका छौं। विज्ञानको चरम विकाससँगै विज्ञानकै पछि लाग्दालाग्दै ज्ञानलाई बिर्सँदै जानु हाम्रो ठूलो भूल भइरहेको छ। जीवन सफल एवं सार्थक तब मात्र हुन्छ जब ज्ञान र विज्ञानको समष्टिगत स्वरुप बन्दछ। ज्ञान अर्थात् अध्यात्म र विज्ञान अर्थात् भौतिकताको तालमेलमा नै जीवनले वास्तविक स्वरुप प्राप्त गर्दछ। विज्ञानको उपलब्धिलाई आध्यात्मिक ज्ञान प्राप्तिको साधन बनाउन सकेमा मात्र हामीले अध्यात्मलाई समाजमा प्रतिस्थापित गर्न सक्तछौं। अध्यात्म भनेको केवल पुरातनवादी सोच हो, विचार हो भनेर यसलाई पूरै पन्छाएर विज्ञानकै मात्रै पछि लाग्दा पनि हामीले भौतिक सुख सुविधा र सम्पन्नता त प्राप्त गर्न सक्छौं तर आनन्द र शान्ति प्राप्त गर्न सक्तैनौं। यो अहिलेको संसारले भोगिराखेको यथार्थ अवस्था हो। यस्तो हुँदाहुँदै पनि, यस्तो देख्दादेख्दै पनि, यस्तो भोग्दाभोग्दै पनि अझै मानिसमा चेत नआउनु चाहिँ आठौं आश्चर्यको कुरा भइरहेको छ।

जीवनलाई सुखमय आनन्दमय बनाउँदै यही जीवनलाई नै अन्तिम जीवन बनाउनका लागि भनेर हाम्रा प्राचीन ऋषिमुनिहरुले विभिन्न विधिविधानहरु दिनुभएको छ। त्यसैको एउटा अङ्गको रुपमा कर्मकाण्ड पनि रहेको छ। कर्मकाण्डबिनाको जीवन जीवन हुनै सक्तैन, त्यो त केवल एउटा मेशिन समानको जीवन हुन जान्छ जसमा कुनै संवेदना हुँदैन। व्यक्तिले काम त गर्दछ तर उसमा कुनै प्रकारको संवेदना हुँदैन। जब मानिसमा सुख, दुःख, हाँसो, खुशी, आनन्द, विस्माद आदिजस्ता संवेदना हुँदैनन्, त्यस्तो प्रकारको जीवनलाई कसरी जीवन भन्न सकिन्छ। त्यसैले पनि जन्मदेखि मृत्युसम्मको मानव जीवनको शृंखलामा आइपर्ने विभिन्न दुःख, सुःख सबैलाई समेटेर अत्यन्त वैज्ञानिक तौर तरीकाबाट कर्मकाण्डको आविष्कार भएको हो भन्दा अत्युक्ति नहोला। कर्मकाण्डले मानिसको शरीरलाई मात्र नभई मन र आत्मालाई समेत शुद्ध गर्दछ। आत्मशुद्धिले नै मानिसले जीवनलाई उच्चतातर्फ लैजान सक्दछ। आहिलेसम्म येनकेन प्रकारेण कर्मकाण्ड हाम्रो समाजमा जीवित रहँदै आएको छ। तर विज्ञानको बढ्दो विकास सँगसँगै आफ्नो संस्कृति, आफ्नो धर्म र आफ्नो परम्परालाई बिर्सने प्रवृत्ति बढ्दै गएको सन्दर्भमा भने अबका दिनहरुमा यो कर्मकाण्ड पद्धति कसरी अगाडि बढ्छ भन्ने चाहिँ प्रश्न चिह्न नै बनिरहेको छ किनकि यसलाई जुन पुस्ताले हाँक्दै आइरहेको छ, त्यसपछिको अर्को पुस्ता जन्मन सकिरहेको छैन। कर्मकाण्डप्रतिको समाजको हेर्ने दृष्टिकोणलाई पनि सुधार्न सकिएको छैन। दुवै पक्ष यसमा दोषी देखिन्छन्– कर्मकाण्ड गर्ने पनि, गराउने पनि। निष्ठा, आस्था, श्रद्धा र भक्तिरहित कर्मकाण्डबाट केही पनि प्राप्ति हुँदैन। त्यो त फगत् एउटा मेशीन समानको कार्य मात्र हुन जान्छ। त्यस्तो प्रकारको कर्मकाण्डले फल पनि प्रदान गर्न सक्तैन र अपेक्षित लाभ प्राप्त नहुने अवस्था आउँछ। त्यस्तो अवस्थामा कर्मकाण्डप्रति अथवा कुनै पनि विषयवस्तुप्रति मानिसहरुको स्वतः अनास्था जन्मने गर्दछ। जब अनास्था बढ्दै जान्छ तब त्यो समाजबाट लोप हुने अवस्था आउन थाल्दछ। हाम्रो समाजमा कर्मकाण्डका विविध किसिमका वैज्ञानिक र अत्यन्त आवश्यक पद्धतिहरु हुँदाहुँदै पनि यसलाई सम्पन्न गर्न सक्ने सक्षम गुरुहरुको अभावमा, सक्षम पण्डित पुरोहितहरुको अभावमा यसले पूर्णता पाउन सकिरहेको छैन। तसर्थ यो केवल गर्नका लागि गरिदिने, परम्परा धान्नका लागि गरिदिने एउटा कर्म बनेको छ। यसबाट अर्को पुस्तामा यो सजिलै हस्तान्तरण होला भन्नेमा शंका उत्पन्न हुन्छ किनभने वर्तमान पुस्ताले विज्ञानमा विश्वास गर्छ। कर्मकाण्डको वैज्ञानिक पक्षलाई हामीले उजागर गर्न सकेनौं भने यसलाई हामीले समाजमा स्थापित गर्न असम्भवप्रायः हुन्छ। तसर्थ हामी सबै मिलेर कर्मकाण्डको वैज्ञानिक पक्षलाई खोजौं, अनुसन्धान गरौं, र यसलाई समाजको प्रत्येक तह र तप्कामा पु-याउने कोशिश गरौं। तपाईंका छोरा नाति लगायत आउने पुस्तालाई यो पद्धति भनेको केवल मरेपछि स्वर्ग गइन्छ भनेर गरिने पद्धति होइन यसका पछाडि वैज्ञानिक रहस्यहरु छन्, वैज्ञानिक कारणहरु छन् र यसको लाभ हामीले यही जीवनमा प्राप्त गर्न सक्तछौं, भौतिक र आध्यात्मिक दुवै रुपमा प्राप्त गर्दछौं भन्ने कुरालाई बुझाउन अब तपाईंले ढिलो गर्न हुँदैन।

हाम्रा हरेक चाडपर्व, परम्परा एवं संस्कृतिहरुका पछाडि ठूलो वैज्ञानिक रहस्य रहेको छ। हामीले जान्न नसक्नु, बुझ्न नखोज्नु र यसलाई हेला गर्नुको परिणति नै अहिले यसप्रतिको अनास्था बनेको छ। त्यसैले अबको समय अनास्थालाई आस्थामा रुपान्तरण गर्ने समय हो, अश्रद्धालाई श्रद्धामा रुपान्तरण गर्ने समय हो, ज्ञानलाई विज्ञानमा र विज्ञानलाई ज्ञानमा समाहित गरेर ज्ञान र विज्ञानको समष्टिगत स्वरुप पहिल्याउने समय हो। यसैमा नै हामी सबैको कल्याण छ। अस्तु!